# समर्पण

पूजनीय पिता **स्व. ललितबहादुर तिगेला**

तथा

माता **स्व. कृष्णकुमारी तुम्बाहाम्फे**ज्यूमा

जसले मलाई यो जीवन दिनुभयो र

सधैंका लागि छाडेर गइसक्नुभयो ।



राजनीति र इतिहासको

# शृङ्खला

(कवितासङ्ग्रह)



लोकेन्द्र तिगेला लिम्बू

# शृङ्खला

(राजनीतिक घटनाक्रमको ऐतिहासिक कवितासङ्ग्रह)

लोकेन्द्र तिगेला लिम्बू


| | |
|---|---|
| प्रथम संस्करण | : २०६८ (१,००१ प्रति) |
| प्रकाशक तथा वितरक | : विश्व नेपाली साहित्य महासङ्घका लागि विश्वास दीप तिगेला |
| अनलाइनमा PDF प्राप्त हुने पुस्तकालय | : www.nepaliliterature.com |
| ©सर्वाधिकार | : लेखकमा |
| आवरण/लेआउट | : स्नेह डिजाइन, बागबजार (amritsigh_123@yahoo.com) |
| मूल्य | : रू १२५/- सार्क राष्ट्रहरूमा (अन्यत्र अमेरिकन $ 5) |
| मुद्रण | : शुभदृष्टि छापाखाना, काठमाडौं |
| ISBN | : 978-9937-2-3182-4 |


Lokendra Tigela Limbu

**SHRINKHALA**

(A collection of poems about historical events of politic)




कमलादी, काठमाडौं, नेपाल
फोन नं.
फ्याक्स नं.
पोस्ट बक्स नं.
इमेल : office@nepalacademy.org.np
वेब : www.nepalacademy.org.np




# शुभकामना

नेपालको इतिहास र राजनीतिलाई केन्द्रमा राखेर कवि श्री लोकेन्द्र तिगेलाले सृजना गर्नुभएका चौँतीसवटा विभिन्न शीर्षकका कविताहरूको सङ्ग्रह 'शृङ्खला'ले नेपाली जातिको पहिचान र गौरवलाई अझ गरिमामय बनाएको छ । विविधताबीचको एकता नै नेपाली जातिको पहिचान हो । त्यसैले आफ्नो जाति, संस्कृति र सभ्यताको खोज, अनुसन्धान वा विकासमा अग्रसर हुनु आज सबै नेपालीको कर्तव्य हुन आएको छ । यसै सन्दर्भमा काव्यका माध्यमबाट आफ्नो इतिहासको पुनर्लेखन र राजनीतिका विकृति, विसङ्गति हटाउन दत्तचित्त कवि तिगेलाको काव्य यात्रा सधैँ अघि बढिरहोस् भन्ने शुभकामना व्यक्त गर्दछु ।

**वैरागी काइँला**
कुलपति
नेपाल प्रज्ञा-प्रतिष्ठान

# 'शृङ्खला' नयाँ राष्ट्रियताको खोज

● श्रवण मुकारुङ

केही समययता कवि, लेखक विश्वास दीप तिगेलासित मेरो सम्बन्ध बढेको छ । प्रवासमा रहेर नेपाली जातिको उन्नतिप्रगतिका लागि हरघडी सक्रिय रहने उनको प्रतिभाको म धेरै अघिदेखिको प्रशंसक पनि हुँ ।

अहिले उनले मलाई विचारशील कवि लोकेन्द्र तिगेलाज्यूको कृति 'शृङ्खला'माथि केही शब्द लेख्ने मौका मिलाइदिएका छन् । चौंतीस वटा शीर्षकमा रचिएका फुटकर कविताहरूको सङ्ग्रह 'शृङ्खला' इतिहास र समकालीन राजनीतिको यथार्थ वर्णन भएको महाकाव्य नै हो । नेपाल र नेपाली जातिको उत्पत्ति र यसको विकासक्रम नेपाली समाजको निर्मितिका क्रममा भएका शक्तिसङ्घर्ष वा अर्न्तद्वन्द्वहरूलाई एक निर्भीक कविको आफ्नो ज्ञानको सीमा, लय र सौन्दर्यद्वारा अभिव्यक्त गरेका वाणीहरू हुन् यी ।

जसरी वर्टाण्ड रसेलले गणितजस्तो जटिलतम् विषयलाई पनि आफ्नो सरल र आकर्षक भाषा शैलीद्वारा रोचक एवम् पठनीय बनाएका छन्, त्यसरी नै इतिहास र राजनीतिजस्तो कठोर विषयलाई यहाँ कवि लोकेन्द्र तिगेलाज्यूले रसमय बनाउनुभएको छ । चलचित्रको कथानकजस्तो लाग्ने यी चौंतीस कविताहरू लय र गतिमा प्रवाहित छन् । ती हाम्रा मुन्दुम, कर्खा, सवाईजस्ता धार्मिक र लोक छन्दको नजिक भएर रहेका छन् । जसले आम पाठकको रूचि र चाहनालाई तृप्त पार्ने मात्रै होइन, अझ कविताका नयाँ पाठकहरूको निर्माण पनि गर्नेछ ।

वस्तुगत तथ्यहरूको बीचमा जीवित रहने इतिहास र कल्पनाको उडानमा अमर रहने कविताबीचको सम्बन्धमा त्यति नै पुरानो छ, जति पुरानो इतिहासको इतिहास छ वा काव्यको इतिहास छ । नेपाली काव्य

परम्परामा त यो अझ घनिभूत थियो । हाम्रा अधिकांश लोक काव्यको अधार इतिहासको वर्णनबाट मुखरित छ । जस्तो- कर्खा, सवाई वा आदिकाव्य मुन्दुम, वेद र पुराणहरू । इतिहास भनेको घटना हो । तर, त्यस्तो घटना जसले बगिरहेको तत्कालीन समयलाई प्रतिबिम्बित गरेको हुन्छ । ब्रह्माण्डमा प्रत्येक समय वा क्षण घटनाहरू घटिरहेका हुन्छन् । तर असल कविले त्यस्ता घटनाहरूलाई मात्र सम्बोधन गर्दछ, जसले मानिस र समाजसित सोझो सम्बन्ध राख्दछ । कवि एवम् विचारक लोकेन्द्र तिगेलाज्यूले त्यसै गर्नुभएको छ ।

राजनीति राज्यको मूलनीति हो । मूल नीति ठीक भएन भने राष्ट्र नरहन सक्छ । राष्ट्र नरहे हामी रहँदैनौं । यो संयोग मात्रै होइन, अहिले हामी यही राजनीतिलाई एउटा लिकमा ल्याउन संविधान निर्माणको प्रक्रियामा जुटेका छौं । यति नै बेला यो कृति आएको छ । यसर्थ, यस कृतिले यो अवस्थामा जनु महत्व राख्ने छ, त्यो विशिष्ट रहनेछ ।

नेपालको राजनैतिक इतिहास र ०६२/०६३ को जनआन्दोलनले प्राप्त गरेका धर्म निरपेक्ष राज्य र संघात्मक शासन प्रणालीजस्ता महत्वपूर्ण उपलब्धीहरूमाथि उठेका गम्भीर प्रश्न, त्यसको सान्दर्भिकता र समाधानका उपायहरू के हुन सक्छन् ? जसले सम्पूर्ण नेपाली जातिलाई मुक्ति, स्वतन्त्रता र समानताको बाटो देखाउने छ । यही नै यो कृति 'शृङ्खला'को सार वा केन्द्र हो ।

कविता इतिहास होइन । तर इतिहासको खोजी गर्ने साधन बन्न सक्दछ भन्ने लोकेन्द्र तिगेलाज्यूले प्रमाणित गर्नुभयो । यहाँ लेखक चिन्तक फ्रान्सिस फुकुयामाको 'इतिहासको मृत्यु'को सन्दर्भलाई कसरी जोड्न सकिन्छ भने चिन्तक लोकेन्द्र तिगेलाज्यूले इतिहासको पुनर्लेखन अथवा इतिहासको विनिर्माणको विषय राख्नु भएको छ । यसको अर्थ पनि हिजोको इतिहास गलत वा अपूर्ण थिएछ । अब सही इतिहास खोजौं भन्ने नै हो । त्यसैले मानिआएको इतिहासको मृत्युबिना त्यो सम्भव रहेन ।

यस कृतिभित्र हामीले मानिआएको अथवा लिखित प्रमाणित भनिएका इतिहासहरूमाथि गम्भीर प्रश्नहरू खडा गरिएका छन् । जसले वृहत् छलफल र विमर्शको माग गरेको छ । त्यति भव्य र सुन्दर किरात सभ्यताले स्वयम् प्रामाणिकता पाउन नसकिरहेको दुब्लो इतिहासमा उभिएर आफ्नो जाति, संस्कृति, सभ्यता र जीवनदर्शनको खोजमा निर्लिप्त कवि

लोकेन्द्र तिगेलाको सपना साकार पार्न नयाँ काङ्सोरे जन्मिन बाँकी नै छ । यद्यपि, यो कृति 'शृङ्खला' इतिहास होइन । कविता हो । कविताको पहिलो पहिचान उसको सौन्दर्यले गर्दछ । सौन्दर्य अनुभूति हुन्छ ।

*जीवन तिमी यहाँ किन आयौ ?*
*जीवन तिम्रो भावबाट म तर्सिन्छु*
*तिमी त कसैलाई शोषण गर्न पो आएका हौ कि ?*
*कलिला निर्धा बालक फूलहरू मात्र बसेका छन् पृथ्वीमा*
*जेमाका दूत हौ भने पनि केही नगर यी कलिला फूलहरूलाई*

**(जीवन तिमी यहाँ किन आयौ ?)**

संवेदनाको पराकाष्ठाले कवितालाई परिभाषाहरूमा रहिरहन दिँदैन । माथि उल्लेखित यस्ता अभिव्यक्ति वा वाणीहरू यस कृतिभित्र सर्वत्र छन् । एउटा खास उद्देश्यले कविता लेखी समय र सन्दर्भले त्यसलाई पुष्टि गर्दछ । कविको अहम्को तुष्टि पनि हुन्छ । अन्ततः कविता, कविता भएरै बाँच्दछ ।

कवि लोकेन्द्र तिगेलाज्यूका यी कविताहरूलाई विभिन्न चरणमा विभक्त गरेर हेर्न सकिन्छ । पहिलो त इतिहासको खोज र पुनः निर्माणको चाहनासित आफ्नो पहिचान र अधिकारका कुरा नै हुन् ।

दोस्रो, आजको राजनैतिक विकृति-विसङ्गतिप्रति कडा आलोचना यहाँ छ । नेता वा शासक वर्गका अस्वस्थकर सत्ता मोह र प्रतिगामी प्रवृत्तिले प्रत्येकपल्ट परिवर्तनकामी जनताको सपनामाथि कुठाराघात भएको, छल र षड्यन्त्रकारी राजनीतिक संस्कृतिको सिकार सिङ्गै राष्ट्र र जनता हुनुपरेको यथार्थ चित्रण यहाँ गरिएको छ । यी सबको आधार युगौंदेखिको सामन्ती संस्कृति वा राज्यसत्ता त्यसको पृष्ठपोषण गर्ने ब्राह्मणवाद नै हो, जसको अन्त्यबिना जातीय मुक्ति र समतामूलक समाजको निर्माण नहुने त्यसका लागि तमाम परिवर्तनकामी नेपाली जनताले स्वयम् नयाँ राजनैतिक आधार तयार गर्नुपर्ने लेखकीय निष्कर्ष छ । आफ्नो इतिहास, जाति, संस्कृति र राजनीतिलाई केन्द्रमा राखेर, सृजना गरिएका यी कविताहरूले आन्तरिक उपनिवेशवादविरुद्ध उभिन र नेपाल र नेपालीको नयाँ राष्ट्रियता निर्माण गर्ने बाटो पहिल्याउन सघाउ पुऱ्याउनेछ भन्ने मैले ठानेको छु । धन्यवाद । ◆

# प्रकाशकीय

मैले जिन्दगीमा सबैभन्दा पहिलो कविता लोकेन्द्र दाजुकै सुनेको हुँ। सायद म त्यो बेला उहाँको आवाज सुन्थेँ र वाचन गरिरहेको मात्र देख्न सक्थेँ। दाजुको घर र मेरो घर वल्लोघर पल्लोघर भएकोले उहाँको साथमा सधैँ नयाँनयाँ र सुकिला लुगा लगाएका मान्छेहरू आइरहन्थे। तिनीहरू कोही कर्मचारी हुन्थे, कोही दाइका कार्यकर्ता हुन्थे। दाइको घरमा धेरैचाहिँ झगडा मुद्दा परेका मान्छेहरू मिलाइदिन अनुरोध गर्न आइपुग्थे, आइपुग्छन्।

फुर्सद भएको बेला सिकुवा, आँगनमा गुन्द्री ओछ्याएर घाम ताप्दै पुस्तकको दोकान थापेझैँ किताब-कापी फिँजाएर अध्ययन गरेर बस्नु हुन्थ्यो। मेरा समकालीन साथीहरूमध्ये म अलि बढी उहाँको नजिक हुन्थेँ र म बालकलाई पनि कविता सुनाउनुहुन्थ्यो र अन्तमा कस्तो लाग्यो भनेर सोध्नु पनि हुन्थ्यो। मलाई उहाँको 'हेण्डराइटिङ' अति सुन्दर लाग्दथ्यो र गाउँको विवाह, सुद्धाइँमा सघाउनी वही चढाउनेहरूको नाम लेख्ने काममा प्रायः दाजु नै बस्नुहुन्थ्यो।

बेलुकीपख अगेनाको डिलमा बसेर तेजबहादुर दाजु र लोकेन्द्र दाजुको खुब राजनीतिक गफ चल्थ्यो र मचाहिँ नजिकै बसेर सुनिरहन्थेँ। कहिलेकाहीँ मध्यरातसम्म भूत र राजनीतिको कुरा हुन्थ्यो। त्यसपछि मलाई घर पुग्न साह्रै डर लाग्थ्यो। म सानो हुँदाका ती क्षणहरू अझै ताजा लाग्छ। उतिबेला गाउँमा दाजुकोमा मात्र रेडियो थियो। मचाहिँ त्यो रेडियोभित्र बोल्ने मान्छे हेर्न खोज्थेँ। रेडियोमा मिठो बोल्नेलाई 'बिहे गर्छस्' भनेर जिस्काउनु हुन्थ्यो, उहाँ।

केही वर्षपछि म सामान्य कविता बुझ्ने भइसकेको थिएँ क्यारे! तल्लो गाँउका डण्डपाणि अधिकारी बजारबाट फर्कदा हुनुपर्छ, दाजुसँगै उहाँको घरमा आउनुभयो। दाजुले उहाँलाई केही कविता सुनाउनु भयो र अधिकारी दाइले डायरी पूरै पल्टाएर हेर्नुभयो। अरू कविताहरू पनि आफै वाचन गर्नुभयो र पुस्तक प्रकाशन गर्नुहोस् भन्ने सल्लाह दिएको कुरा मलाई राम्ररी थाह छ। त्यो लगभग वि.सं. २०४३ सालतिरको कुरा हुनुपर्छ। ती कविताहरू धेरै राम्रा थिए। अलि पछि म आफै पनि कविता लेख्ने भएँ। त्यसपछि त दाजुको पहिलो पाठक, श्रोता नै म हुन्थेँ। 'मानव उत्पत्ति र खेवा वंशावली' पुस्तकको निम्ति

पुस्तौनी सङ्कलनार्थ गाउँगाउँमा मलाई उहाँले साथमा लगेर एकदुई रात अनिदो पनि बताउनुभएको थियो । त्यसबेला दाजुले रङ्गीन चिल्लो गाता भएको मार्क्सवाद र लेलिनका पुस्तक पढ्नुहुन्थ्यो । केही समयपछाडि 'नेपालको राजनीतिमा अदेख्खा सच्चाइ' पुस्तक, 'कइरन' पत्रिकालगायत अध्ययन गर्नुहुन्थ्यो र मैले पनि पढ्ने अवसर पाउथेँ ।

बहुदलीय व्यवस्थाको पुनर्स्थापनालगत्तै दाजु केही फुर्सदिलो हुनुभयो । जिल्ला सदरमुकाम धनकुटा आउँदा एकाबिहानै धनकुटा बजारका छोरीचेलीहरूले मन्दिरहरूमा गएर पूजा गरेको उहाँलाई खुब मन परेछ । उहाँले गाउँमा सबैलाई भेला गराएर भन्नुभयो, 'हाम्रा छोरीचेलीहरूले पनि बिहानबिहानै जाँड, रक्सी पिउनुको सट्टा पूजा गरून् र त्यसका लागि एउटा मन्दिर बनाऔं ।' गाउँको बीचमा धेरै दुःख गरेर मन्दिर स्थापना पनि गरियो । तर, केही छोरीचेली र गाउँका मान्छेले मन्दिरभित्र राखिएको मूर्ति देखेर आफू तर्सिएको कुरा गरे । थोरैले मात्र मन्दिरको उपयोगिता लिए, लिँदैछन् ।

यो एउटा प्रतिनिधि उदाहरण हो । लोकेन्द्र दाजु अत्यन्तै सिर्जनशील र रचनात्मक व्यक्ति हुनुहुन्छ । सम्भवतः एक हप्तामा कम्तिमा एउटा नौलो कुरा सोच्न सक्ने क्षमता उहाँमा छ भन्दा गलत हुँदैन । मान्छे धेरै हुन्छन्, तर सबै सिर्जनशील हुँदैनन् । गाउँघर वातावरण परिवर्तन गर्न निश्चित समयमा निश्चित व्यक्तिहरूको भूमिका रहेको हुन्छ र हाम्रो गाउँसमाजमा उहाँको भूमिका धेरै रहेको छ । हुन त त्यो जमानामा शिक्षण पेशा अँगाल्नुभएका दाजुका विद्यार्थीहरू पनि गाउँमा धेरै छन् । विशेषतः लामो समय समाजसेवामा लाग्नु, सफलता प्राप्त हुनु उहाँको उल्लेख्य पक्ष हो । नेपालको इतिहास र राजनीतिलाई अति सूक्ष्मदेखि वृहत्सम्म अध्ययन गरेर, कतै नझुकी स्पष्ट विचार राखेर स्वाभिमानी बन्नु उहाँको परिचय हो । उहाँलाई महलको नोकर बसेर महलमा ओत्थिनुभन्दा वास्तविक धरातल टेकेर झुपडीमा बस्नु आत्मसम्मान हो भन्ने लाग्दछ । त्यसैको दस्तावेज हो यहाँ प्रस्तुत यी कविताहरू ।

म जहाँ रहे पनि मलाई तिनै रमाइला र सुन्दर कविताहरूको खुबै याद आउँथ्यो । म पटकपटक योजना बनाउँथेँ र उहाँलाई भन्थेँ, 'म हजुरको कविता प्रकाशन गरिदिनेछु । सबै कविताहरू भेला गर्नुहोला किनकि म पनि यिनै अक्षरको खेतीमा छु । साहित्यको बारेमा बाल्यकालमै सकारात्मक प्रभाव दिनुहुने अग्रजको कृति प्रकाशन गरिदिंदा मलाई पनि आत्मसन्तुष्टि मिल्नेछ भन्ने मेरो बुझाइ हो । तर, जुन कविताहरूले मलाई याद दिलाउँथ्यो, दण्डपाणि दाइले पुस्तक बनाउनुहोस् भन्नुभएको थियो, अफसोच ! ती कविताहरू यहाँ छैनन् । अन्य नयाँ कविताहरू छन् । कवि दाजुकाअनुसार ती पुराना कविताहरू हराएछन् । म तिनै पीडामा अझै दुखिरहेको छु ।

कसैले कुनै पनि गुन लगाउँछ भने उसलाई जसरी भए पनि कुनै पनि

माध्यमबाट गुन फर्काउनु पर्दछ भन्ने मेरो मान्यता हो। हाम्रो सानो सहयोगले ठूलो परिवर्तन पनि हुन सक्दछ। त्यसैले सामर्थ्य अनुकूल रहुन्जेल सहयोग गर्दै आएको छु। यसअघि नाटककार तथा सभासद् हरिराज तिगेलाको एकाङ्कीसङ्ग्रह 'अपदस्त जिन्दगी', अग्रज पत्रकार राजकुमार दिक्पालको कथासङ्ग्रह 'आतङ्कको छायामुनि', महाकाव्यकार अमर तुम्याहाङको लिम्बू भाषाको महाकाव्य 'सोधुगेन इमानसिं चोत्लुङ', सेसेमी से नाल्बोको लिम्बू भाषाको खण्डकाव्य 'सोबुहाङ्सा', झमक घिमिरेको आत्मकथा 'जीवन काँडा कि फूल' विशुद्ध प्रकाशन सहयोगको अनुभवपछि यो राजनीति र इतिहासको 'शृङ्खला' कवितासङ्ग्रह छैठौं पुस्तक प्रकाशन हो भने यस सङ्ग्रह प्रकाशनका लागि मलेसियामा कार्यरत सन्तोष र काठमाडौंबाट थर्क दीपको पनि सहयोग र सद्भाव रहेको छ।

विश्वव्यापी बन्दै गएको नेपाली साहित्यको श्रीवृद्धिका लागि 'विश्व नेपाली साहित्य महासङ्घ'को सन् २०१० मा स्थापना भएको हो। सुन्दर र नौलो स्वादका सिर्जनाहरू रहेका यस कृतिको प्रकाशनको जिम्मा साहित्य महासङ्घ, केन्द्रीय समितिको छाताभित्र रहेको छ। विश्वका प्रत्येक देश, प्रत्येक शहर, गाउँ, टोल, समूह, समुदाय, विश्वविद्यालय, क्याम्पस र विद्यालयमा समेत यस साहित्य महासङ्घको शाखा बन्न सक्ने विधानतः व्यवस्थाअनुसार नेपाली साहित्यको सबैभन्दा ठूलो सञ्जालोन्मुख महासङ्घ र लेखक स्वयम्को संयुक्त संयोजनमा यो कृतिको प्रकाशन भएको छ।

यस 'शृङ्खला' कवितासङ्ग्रहमा समाविष्ट कविताहरूको आधारमा उहाँलाई चेतनाकवि भन्न सकिन्छ। यस्ता यथार्थवादी र लयात्मक कविताको आफ्नै उच्च महत्व रहेको छ। यसर्थ, भावी दिनका लागि पनि कविज्यूलाई उत्तरोत्तर प्रगतिको शुभकामना व्यक्त गर्दै विश्व नेपाली साहित्य महासङ्घ www.gfnl.org को प्रतिनिधित्व गरी यसपटक यहाँहरूसमक्ष शृङ्खला कृति पस्कँदै अन्य अवसरहरूमा पनि यहाँहरूसमक्ष उपस्थित हुने वाचा गर्दै आजलाई यति नै। ◆

**विश्वास दीप तिगेला**
महासचिव
विश्व नेपाली साहित्य महासङ्घ,
अन्तर्राष्ट्रिय केन्द्रीय समिति

biswasdip@ymail.com
सेरिया, ब्रुनाई
२७ जुलाई २०११

# आफ्नो भनाइ

चेतनशील र विवेकशील प्राणीमा आ-आफ्ना ऐतिहासिक अभिलेखहरू आ-आफ्नै अस्तित्वसँग गाँसिएका हुन्छन् । चेतना विश्वको जुनसुकै मुलुकका मानवहरूको ऐतिहासिक पहिचानसँग सम्बन्धित हुन्छ भने ती समाजका हजारौं हजार वर्षसम्मका पूर्व पुस्तासँग त्यतिकै परस्पर रहन उत्साही हुन्छन् । तर जो उत्साही हुन चाहँदैनन् त्यस्ता मानव प्राणी भएको सही अर्थ हुँदैन । जस्तै जङ्गलका बाँदर ढेडुको संज्ञामा तुलना गर्न सकिन्छ । म को हुँ ? म कहाँ छु र मैले के गर्नुपर्छ भन्नेसम्म बुझ्न सकिएन भने भावी पिँढीहरू ठूलो दुर्दशामा फस्न सक्नेछन् ।

यसै सन्दर्भमा नेपालको भूगोलसँग सम्बन्धित रहेको हिमाल, पहाड, तराईका नदी-नाला साथै मठ, मन्दिर, धार्मिकशाला नेपालभूमिका समाजहरूको इतिहास र आजको यो कलियुगान्तर भोगमा राज्य उपभोग गर्दै आएका शासकहरू महिषपाल, गोपालवंश, किरातवंश, लिच्छवीकाल, मल्लकाल र शाहकालीन साथै आज गणतन्त्र हुँदै राष्ट्रपति चरणमा आइसकेकोले यस्ता महान् ऐतिहासिक घटनाहरूका बारेमा भावी पिँढीहरूलाई अवगत गराउनु मानवताको एक प्रमुख कर्तव्य हो । आफ्नो ठहर यही भएको हुँदा नेपालको राजनैतिक घटनाक्रमलाई ऐतिहासिक कवितासङ्ग्रहमा सङ्कलन गरेको छु । मेरो कवितासङ्ग्रहको कुनै पाठपङ्क्तिमा कुनै जात, वर्ग र समाजहरूको ऐतिहासिक घटनाक्रमले देखाएअनुसार अभिलेखहरू तयार रहेका छन् । यसलाई कुनै अनौठो मान्न नहुनसमेत आग्रह गर्दछु । त्यसलाई ऐतिहासिक कार्यकाल ठान्नसमेत अनुरोध गर्दछु ।

नेपालको राजनैतिक घटनाक्रमको ऐतिहासिक कवितासङ्ग्रहको पाण्डुलिपि अध्ययन गरी ओजपूर्ण भूमिका लेखी मलाई ऋणी बनाउनुभएको छ प्राज्ञ एवम् लोकप्रिय कवि श्रवण मुकारूङले । म उहाँप्रति ज्यादै आभारी छु । यसैगरी कम्प्युटर टाइप गरिदिनु हुने भाइ मोहन घिमिरे र डिजाइन तथा सेटिङका लागि स्नेह डिजाइन, बागबजारलाई धन्यवाद । कविताका हिज्जेलाई सरसर्ती हेरिदिनुहुने रमेश सागरज्यूलाई पनि धन्यवाद ।

नेपालको राजनैतिक घटनाक्रमको ऐतिहासिक कवितासङ्ग्रहलाई प्रकाशन गरी पूर्ण सहयोग गरिदिने भाइ विश्वास दीप तिगेलालाई सदा सम्झी नरहन सक्तिनँ । भाइसँग मेरो बालककालदेखि नै धेरै कुराहरू आदानप्रदान र सरसल्लाह भइरहन्थ्यो । र, भाग्यवस केही समयको लागि विदेशी भूमिमा रहन बाध्य भए पनि उनले बृटिस गोर्खा सेनाको मात्र काम नगरी नेपाली साहित्यको लागि विश्वमै ख्याती कमाउँदै गएका छन् । उनी आफै साहित्यकार हुन् । उनका आधा दर्जन पुस्तकहरू प्रकाशित भएका छन् । त्यति नै साहित्यिक सङ्घसंस्थामा उनको सक्रियता र सहभागिता रहेको छ । यसरी मलाई पटकपटक साहस र आत्मबल प्रदान गरेपछि मेरा सिर्जनाहरू भेला गरेर उनै विश्वास भाइलाई जिम्मा दिएको छु ।

यस पुस्तकले भोलिका आम नेपाली युवापिँढीलाई नेपाल र नेपालीका विषयगत इतिहासबारे बुझ्न र लेख्नमा सहयोग पुगोस् भन्ने अपेक्षा राख्दै पाठकहरूप्रति स्वस्थ सल्लाह, सुझाव साथै यस लेखन तथा सङ्कलनकार्यमा भएका कमीकमजोरीहरूलाई औँल्याइदिनुभई सच्याउने मौका दिनुहुनेछ भन्ने आशा राख्दै बिदा चाहन्छु ।

धन्यवाद । ◆

**- लोकेन्द्र तिगेला लिम्बू**

# कविताक्रम

# जीवन तिमी यहाँ किन आयौ ?

जीवन तिमी यहाँ किन आयौ ?
जीवन तिम्रो भावबाट म तर्सिन्छु
तिमी त कसैलाई शोषण गर्न पो आएका हौ कि ?
अमूल्य जडहरूले सजिएको तिम्रो जीवन ।
मुटुको छ ढुकढुकी
जीवन तिमी यहाँ किन आयौ ?
पृथ्वीका काखमा नीलो आकाशको पर्दा ओढेर बसेका छौ घुम्टो ओढेर
मिरमिरे सूर्यलाई पछ्याउँछौ तिमी पोल्छ कि चैत्रका घामले
औँसीका पञ्चमी तिथिमा त्यो खुर्पे जूनको
भरनगर तिमी बीचमा पर्लाऊ आपत्ति
पूर्णिमाको गोल चन्द्रमाझैँ उदासिन भएर बस
हुन्छ बरु ती सम्पत्ति ।

जीवन तिमी यहाँ किन आयौ
तिमी यो संसारका कति दिनको यात्री हौ
तिम्रा आमा बाबाले आशीर्वाद कति दिएका छन्
मलाई भन नढाँटी यात्री हौ तिमी !
यो पृथ्वीको चौतारी बिम्ब हो भरोसा हुँदैन
यसको नगर विश्वास
जीवन तिमी यहाँ किन आयौ ?

वैशाखको वसन्तऋतुले पोलिसक्यो
मध्यान्तरको जवानीमा तिमी फसिसक्यौ

के गर्नु छ तिमीले चाँडै गर्ने गर
पालो दिनु छ गृष्मऋतुलाई
गृष्म ऋतुको नदीझैं सङ्लो र सफा पो छौ कि
यमराजको दूत भएर पृथ्वीमा झरेका पो हौ कि
तिम्रो हृदयलाई कसरी बुझ्नु म
उपाय सिकाइदेऊ
जीवन तिमी यहाँ किन आयौ ?
कलिला निर्धा बालक फूलहरूमात्र बसेका छन् पृथ्वीमा
जेमाका दूत हौ भने पनि केही नगर यी कलिला फूललाई
तिम्रो मुटु मिचेर भए पनि नचुँडाइदेऊ कलिला मुटुलाई
तिम्रा हृदयका चट्टानहरू फोर्ने गर ती निर्धाहरूका लागि
अप्सराहरूका ती मोतीका हारहरू मागेर देऊ ती निर्धाहरूलाई
जीवन तिमी यहाँ किन आयौ ?
ईश्वर स्वरूपको जीवन तिम्रो नफाल व्यर्थमा त्यसै
स्वर्गका फूलबारीझैं कृतिले फुलेर बस तिमीलाई मेरो शुभकामना
यो कविताको लहरमा हृदय गाँसिएको छ
नेपालका ऐतिहासिक पानाहरू यसैमा राखिएको छ ।



# नेपाल भूगोलको राजनीतिक दर्शन

हिमाल प्रदेशको काखमा रहेको नेपाल
भारत देशको शिरमा बसेको सिमाना नेपाल
पूर्वमा मेची नदी पश्चिममा महाकाली
दक्षिणमा मैदान उत्तरमा हिमाली ।

चौधै अञ्चल पचहत्तर जिल्ला नेपालको विकास
नेपालका झरना र नदीनाला दक्षिणमा निकास
तराईका मैदान मध्यप्रदेशका पहाड उच्चमा हिमाल
पहाडका भोटे, मध्य पहाडका किरात मैदानका चौधरी धिमाल ।

नेपालका भौगोलिक दर्पणदाता यिनै जनजाति भाका
हिमाल पहाड र तराई बस यिनै जातिले खाका
पश्चिमका महाकाली पूर्वका मेची नदी
यिनै सीमानाहरू नेपाल भू-भागको छन् जति ।

हिमालका झर्नाहरू तराईमा भए नदी
नेपालका बैरङ्गी कलाकार सबै भए कवि
नेपाल भू-भागका दार्शनिकहरूका छवि
बाँचेका छन् नेपालका भौगोलिक आकारसँग अति ।

●

# कलिको भोग कसरी पार गरिँदैछ

सत्य युगलाई लाखौँलाख हजार वर्षमा गन्छ
द्वापार त्रेता युगान्तरमा क्रमिक घटेका छन् भन्छ
कलिको आयु छ हजार वर्षमात्र रहेको बताउँछ
महाविद्वान वेदशास्त्रीहरूका पौराणिक कथामा छ।

कलियुगको थालनीमा शिव, पार्वती
चेतन विवेकशील मानवको उत्पत्ति
शून्यभूमि नेपालमा महानाग दह थियो
महिषपाल नामले मानवको सृष्टि गरिदियो।

२५० वर्ष महिषवंशीहरूको राज्य भयो
त्यस नाग पोखरीको आसपासमा शिव पार्वती रह्यो
शिव पार्वतीको भक्ति उपास गर्थे महेश राजाहरू
महेशपाल नाम हटाई गोपालवंश पछि बने बरु।

महिषपाल र गोपालवंश भई ५ सय वर्ष राज्य गरे
कलियुगको थालनी उपभोग यसरी गर्दै अगाडि बढे
शिव पार्वतीलाई किरातले पितृ भक्तिमा पुज्दछ
महिषपाल गोपाल वंश पनि किरात वंश धारमा झुक्दछ।

गोपालवंश कलियुग ५ सय जाँदा अन्त्य भएको छ
किरात राजा यलम्बर भएर राज्यसुर गरेको छ

यलम्बरको ३२ पिंढी शाखाको राज्य रहेको थियो
२५०२ वर्ष किरातकालीन राज्य रहेको थियो ।

किरात सम्वत् ५ हजार ६८ वर्ष जाँदै छ
गोपालवंश र किरातको गरी ३००२ वर्ष हुँदैछ
विक्रम सम्वत् २०६५ पुग्दैछ
आज कलियुग ५०६७ वर्षमा गएको छ ।

कलियुगको बाँकी अंश ८ सय ३३ वर्ष छ
मानवको शक्ति चमत्कार सङ्घर्षरहित छ
८ सय ३३ वर्ष थाम्न सक्ने मानव समाजले कसरी
ईश्वरी कर्ताको नाम जपतप गरेर बाँच जसरी ।

कलिको उपभोग हुनजान्छ लाचारी अहिंसा साथमा
जातिवादी रहँदैन कतै पुरुष र नारी जातमा
अहिंसा फैलिएर संसारै डुब्दछ
ईश्वरी भक्तिका यदाकदा कोही कोही बाँच्दछ ।



# महिशपाल गोपालवंश पनि किरात नै थिए

नेपालको भूभागमा महिशपाल र गोपालवंशी
परापूर्वकालका नेपालभूमिका भएका छन् दसी
किरातेश्वर महादेवका लीलास्थल जहाँ
पशुपतिनाथको नामले रहेका छन् त्यहाँ ।

गोपालवंशको उदय भन्दाअगाडि
पशुपतिनाथको इतिहास जोडिन्छ यसरी
गोपालवंशी गोठालोले गाई गोठालो गर्दा
भगनस्त स्थल जहाँ गाईको दूध झर्दा ।

गोपालवंशी गोठालोहरू सबै भय चकित
निश्चय पनि केही शक्ति छन् यहाँ मन्दिर बनाउन उचित
गोपालवंश राजाहरूसँग जोडिन्छ पशुपति
किरातेश्वरको लीला नै किरातीहरूको उत्पत्ति ।

त्यसताकका मानवसभ्यतामा परेका महिशपाल,
पछिका शताब्दीमा हुन गए पुनः गोपालवंश ग्वाल
किरातवंश धारमा विश्वास गर्न सकिन्छ
महिशपाल गोपालवंश महादेवका पुजारी गनिन्छ ।



# किरात सभ्यतामा उदय

यलम्बर जो थिए किरात इतिहासका दाता
तीसदेखि बत्तीस पिँढीसम्म राज्य खाका
नेपालका इतिहासमा किरात प्रथम देखिन्छ
आजका इतिहासकारहरूले लेख्न कन्जुस गरेका।

किरात राजपाठ धेरै समयसम्म रहेको
किरातवंशको वंश विकासले धेरै जाति भएको
आज देखिएका मङ्गोल अनुहारका सबै किरात रहेको
जातीय विभाजनसँग प्रान्तीय क्षेत्र हुन गएको।

किरातवंशका एक आपसमा मनमुटाव भयो
आर्य कुलका हिन्दूहरूले फुटाउने मौका पायो
हिन्दूस्थानका कुनै क्षेत्रबाट आएका हिन्दूले खायो
क्रमिक रूपले हिन्दू अनुयायी नेपालमा घुस्न पायो

किरातकालका धार्मिक थालनी लिच्छवी मल्लकालमा
जति आज रहेको छ नेपालमा किरातवंशका पालमा
त्यस अवस्था कालमा धर्मकर्मको देखिन्छ चलन
तिनै धर्म कुण्डल मन्दिरहरू आज भएका छन् धर्म दलन

नेपालको प्रथम सभ्यता नै विरुपाक्षको मूर्ति
आज भनिएको छ जहाँ कलिका हुन् यो मूर्ति
किरातकालीन सभ्यतामा यसरी शुरु भयो
जहाँ आजसम्म अस्तित्वको स्मृति भइरह्यो।



# लिच्छवी, मल्ल, किरातवंशभित्र

लिच्छवीवंश र मल्लकालीन किरातकै वंश हुन्
लिच्छवी मगरवंशका थिए भने मल्ल नेवारवंशका हुन्
हिन्दूहरूको चलाखी नीतिले धर्म कर्म भित्र्याएका हुन्
आज नेपालको ऐतिहासिक पङ्क्तिमा अग्रिम भएको छ जुन।

देवस्थलहरू जति छन् आज किरातकालका सारा
सावित प्रमाणित हुन विरुपाक्ष मूर्ति दुवार
पशुपति आर्यघाटका त्यस ताकका कलाकार
मूर्तिकार र चित्रकारहरू किरात विभूति सार।

काठका चित्र, कण र माटाका कलाहरू किरात विभूतिसँग
आज ती कला र चित्रकणसँग विदेशी पर्यटक दङ्ग
शिल्पकालीन किरात युगसँग नेपाल आज रङ्ग
यस्ता कला र संस्कृतिका विभूतिका साख परेका छन् भरङ्ग।

धर्म कर्म र भाषा संस्कृतिले नेपाल रङ्गायो
लिच्छवी र मल्लकालीनलाई किरातबाट बङ्गायो
जातिपाती र भेदभावहरू हिन्दू हैकमको भयो
चार जात छत्तीस वर्णको फूलबारी भनी सबै लियो।

लिच्छवी चाँगुनारायण मल्लकालीनका मन्दिर
नेपालमा जति छन् स्मृतिहरू सोच्नुपर्ने छ गम्भीर
स्मृतिका शाखाहरू जो छन् फसेका छन् गन्जीर
हिन्दू अनुयायी जो छ आज देशमा भएका छन् खम्बीर।



# गहिरो चपेटा

रक्तपात र आतङ्कले भरिभराउ गराएको छ नेपाल
पापैपापको मुलुकदेखि शिर झुकाउँदै छ हिमाल
कैलाश पर्वत पार्वतीको शिवजीका हिमाल
सत्ययुगका मोतीहारहरू पाइँदैन नि माल।

काठमाडौँको काष्ठमण्डप हनुमान ढोका
राजवंशको आजतक पनि सिंहासनको खोका
हिन्दू शासक अनुयायीहरूका राजनीति गर्ने धोका
देशको सारा सम्पत्ति र विदेशी लगानी भ्रष्टचारीको पोका।

देशका आदिवासी जनजाति नामाकरणले पूरा
हिन्दू समाजको जो हुन सक्छ भक्त, वंशलाई मास्ने छुरा
जनजातिको भाषिकमा परिणत भएका छन् किराती भुरा
आफ्नो अस्तित्वलाई लात मारी झोला बोक्ने गर्छ कुरा।

ढोके पहरे शक्ति प्रदर्शनकारी किरातीकै छोरा
कोठा र चोटामा लुकी हुकुम् दिने ती हिन्दू आर्य मोरा
नेपालको इतिहास सङ्कलन गरी राख्ने विदेशी गोरा
जिन लगम आदि बसीलाई आर्य मोराको हो र!

नेपालमा यस्तै गतिविधिले शासन लिएको छ
शाहवंशका गद्दी भोगविलास यस्तै रीतले चलेको छ
शाहवंश पनि हिन्दू अनुयायी भित्र पर्ने नपर्ने कोकोहोलो नै छ।
हिन्दू धर्मभित्र नपर्ने के कति कार्य सङ्कलन नै छ।

द्रव्य शाहवंशका राजपुतहरू सावित गाँसिएको छ
गोर्खा राज्यका राजपाठबाट शाहवंश रासिएको छ
लमजुङ भीरकोट तानसेन आदि शाह घुसिएको
इतिहासहरू बर्बराए पनि द्रव्य शाह नै गाँसिएको छ।

सकल किरातवंशका शाखा जो थिए मगरहरू
सर्वप्रथम किरातकालीन अपहरण गर्ने द्रव्य शाह नै बरु
शाह वंशको इतिहासले थालनी गर्दै आउनेहरू
आजका आर्यमूलका राज्य आसिनकारहरू।

धर्मकर्म जति छन् नेपालमा किरात सभ्य जाति
किरातकै अपभ्रंश हिन्दू आर्य धारी लिच्छवि मल्ल आदि
सभ्य सु-व्यवस्था जति भयो धर्मको किरातकाल नै वादी
नेपालमा कृष्ण रामको जति धार्मिकस्थल छन् ती ब्रह्माण्डका आदि।

प्राकृतिक पूजा आराधनाकारी किरातवंशको
राम कृष्ण आदि मानव औतार आर्यवंशको
धर्म कर्म र तप आदि गर्छन् मानव हंशको
जालझेल आदि कार्यमा निपुण छन् हिन्दूवंशको।

गोहीको आँसु चुहाएर आफू अमृत मान्ने
हिन्दू संस्कार आदिवासीहरू सम्पूर्ण आफैं जान्ने
ऋषिमुनिहरूको जपतप गर्ने आर्य धर्म कर्म
अकुशल नीतिको भय पनि कुशल नीतिको मर्म।

हिन्दू आर्य समाजको आशीर्वादले कति दिन बाँच्ने
नेपाल कंगालबाट चण्डाल भयो अब कति दिन नाच्ने
ब्राह्मणको ब्रह्मलुटले ब्राह्मण हावी राख्ने
ब्राह्मणका जालझेलबाट अब कति दिन बाँच्ने।

हिजोसम्म छुवाछूतको भेदभावले धनी भए
ब्राह्मण हैजम राक्षस गणमा प्रवेश गरी अब कता गए

हिन्दू धर्मका निरङ्कुश व्यवहारले मानव भय भो भय
छुवाछूतको अभिशापले मुर्दा सरी कोही भए।

खुकुरीको पीडालाई अचानोले चाखेको छ
ब्राह्मण जालबाट अब आफैं राम्रो गरी पाकेको छ
ब्राह्मणका घरमा अछुती चेलीले चोख्याएको छ
अन्याय अत्याचारी अछुती नीतिलाई शेबदेले हटाएको छ।

आर्य समाजको वंशबाट मुक्ति पाउनलाई
धेरै धैर्यता रहनुपर्छ अन्य जातिले लिनलाई
ब्राह्मण जालको जालले आफै विष खाई
छुवाछूतको भेदभावबाट बल्ल हट्यो ब्राह्मणलाई दुहाई।

पृथ्वीनारायणको एकीकरणले
किरातवंशका प्रान्तीय स्वतन्त्रताको हरणले
किराती मखुण्डो किरातलाई नै लाइदिनाले
किरातवंशका अभिशाप भयो आफैँ नजान्नाले।

लोहालाई सताउन लोहा नै प्रयोग गरियो
किरात हरण गर्न किरातवंश नै अघि सारियो
न आर्य जातका मगर गुरुङलाई हतियार बनाई
सयौँ कालका किरातहरूलाई यस्तै सुनियोजितले हराई।

कुनै जातिलाई हराउनै पर्छ भने जाति फेरिदिने
अस्तित्व हराई दिन पर्छ भने संस्कृति लुटी लिने
यस्तै निरंकुश शासनले मात्र देश लिने
अन्तर्राष्ट्रको सामुमा परिचित आफू हुने।

चरित्रविहीन ब्राह्मणहरू दान असर्फी लिने
त्यति मात्रले नभएर मरेपछि पनि काट्टो पिसी खाने
जिउँदोदेखि मर्दासम्म पनि मानवलाई हैरान दिने
यस्ता आनवश्यक कार्य गर्नाले आज आफू छिर्न।



# शाहवंशको इतिहासमा कुँवर क्षेत्री थपिए

एकसय चारवर्षको राणाकालीन जङ्गेवंशको थियो
राजदरबारमा षड्यन्त्र गरी हैकम आफूले लियो
शाहवंशी राजा भए पनि थपना स्वरुप रहयो
राणाकालीन व्यक्तिवाद स्वार्थमा एक सय चार वर्ष गयो।

राणा बादशाहहरू स्त्रीलुप्त देखिन्थ्यो
एक राणाका अठार उन्नाइससम्म पुत्र जन्मन्थ्यो
राणाको पुत्रहरू जन्मँदै जर्नेलको पदवी पाउँथे
देशका सारा आर्थिकस्रोत जर्नेली भत्तामा खान्थे।

देशको विकासमा पच्चीस प्रतिशत पचहत्तर भत्तामा
राणाहरू उछिनपाछिन गर्दै जुद्थे राणा जत्थामा
एक आपसमा मारामार गर्थे प्रधानमन्त्री पद पार्थे
देशका उच्चस्तर सेना निजामतीमा राणा खालकै बन्थे।

यस्ता निरङ्कुश जहानियाँ शासन नेपालीले भोगेको
जनताहरू सबै कठपुतलीको आधारमा बसेको
ठूलाठूला व्यक्तिगत महल बनाउन आर्थिक धोकेको
विकासको आर्थिक स्रोतहरू यस्तैमा सकेको।

किरात अपभ्रंश लिच्छवी मल्लकालमा धर्म कर्मले लियो
शाहवंशको उत्तराधिकारी अवस्थामा राणाकालीन थियो

शाहवंशी राजपाठवाला सिंहासन कुटीमा सीमित बस्यो
राणा बनेका कुँवर क्षेत्रीहरू व्यक्तिगत आर्जनमा घसियो ।

२००७ सालको क्रान्ति जहाँ आयो
राणा धपाउको अभियानले राणा सबलाई खायो
आजका सिंहदरबार चन्द्र शमसेरको घर थियो
बबर, हरिहर आदि भवनहरू मन्त्रालयले लियो ।

●

# राणाका खुनी व्यवहार

राणाकालीन सभ्यताकालमा आदिवासी किरातलाई
विदेशी बृटिस भारतलाई बीर गोर्खाली नाम दिलाई
स्वदेशमा आर्य स-कुशल रहने किरात वंश बहादुर खुलाई
विश्वको विश्व लडाइँको भुमरीमा जनजातिलाई हुलाई ।

नेपालमा बसेका व्यक्तिगत स्वार्थी शासकहरूको
इज्जत बढाई वीर गोर्खालीको नामले जीवन बली दिएको
आजसम्मका सुरवीर लडाइँ गर्ने तिनै किरात बालकको
विदेशी रोयल्टी कमिसन खाई बाँचेका छन् आर्य खलकको ।

जसको जातिपाति र धर्मकर्म दुई नम्बरका भएको छ
उसैले जीवन अर्पण गरी विदेशी ढोका भोगेको छ
राणाकालीन सभ्यता विकास जनताले बुझेको छ
आज आएका प्रजातन्त्रले यिनै मन्त्र खोजेको छ ।

बहुदल प्रजातन्त्र नेपाली जनताको स्वतन्त्र ढोका हो
धर्म भाषा निरङ्कुश रही जनजातिलाई धोका भो
कसैको धर्मभाषाले राष्ट्र र राष्ट्रियता मान्यता पायो
कसैको भाषा धर्म निरंकुश राजतन्त्रले खायो ।

नेपालको एक पक्षीय निरङ्कुश शासनमा
धर्म भाषा सबै गुम्यो आर्य हिन्दू आसनमा
पूर्व क्षेत्रका राई लिम्बू जिमी सुनुवारमा
निरङ्कुश जमाई ल्यायो हेर्दै अनुहारमा ।

●

# ब्राह्मण विकास

आर्य चतुरतावादीहरूले वन ह्रास र पिण्डेश्वरीमा
संस्कृत विद्यालय खोली ब्राह्मण पुत्र विद्याश्वरीमा
राष्ट्रिय आर्थिक स्रोतबाट संस्कृति विद्यालय खोलियो
ब्राह्मण कुलभन्दा अन्य जाति वर्गलाई निषेधित गरियो ।

ब्राह्मण कुलकालाई शिक्षाको विकास गरी
राष्ट्रको सारा अंगमा कामकाज गर्न अघि सारी
दुई सय वर्षको हाराहारीमा उच्च वर्गमा पुगे
अन्य सब जाति वर्गलाई शोषण गरी ठगे ।

आर्य संस्कृत पाठशाला धर्मशाला आदि
ब्राह्मण कुलका छोरा छोरीहरूले शिक्षा आर्जन गर्ने भनी
अन्य जातिपातिका छोराछोरीलाई पढ्न निषेधित
राजदरबारका धार्मिक मण्डलमा भयभित्र यदि ।

अब भए डिठ्ठा विचारी जन्मदेखि मर्नसम्म
मान मर्यादित सबै हुन लागे शिरदेखि पाउसम्म
राज पुरोहितदेखि मन्त्रिमण्डलका विभागमा टम्म
ब्राह्मण कुलका विकसित भई अगाडि बढ्न पाए जन्म ।

हिन्दू संस्कृति सभ्यता विकासले
सबै जाति संस्कृति नै गुम्दै गयो निकासले
सबै जातिका कहन्छन् के गर्ने इतिहासले
नेपाल भाँडिन गएको छ यस्तै बित्यासले ।



# लिम्बुवानसँगको सन्धि

श्री ५ पृथ्वीनारायण शाह धूर्त चलाखी थियो
प्रान्तीय कुनै शक्तिसँग शान्ति वार्ताको प्रथा लियो
लालमोहर लिने पूर्व क्षेत्रका लिम्बुवान भयो
ताम्रपत्र लालमोहरमा सत्य वाचा थियो ।

मगर गुरुङ तामाङ आदि जनजातिलाई
एक आपसमा लड्न भिड्न गराई ल्याए फुटाई
पूर्वक्षेत्रका राईसँग लडाइँ गरी हटाई
मगर गुरुङ किरातवंशबाट सबलाई दबाई ।

खम्बुवानमा अन्त्य गरी लिम्बुवानमा आयो
रघु राना मगरको नेतृत्वबाट विशाल लडाइँ भयो
लिम्बुवानको वीर काङसोरे र रघु रानाबीचमा
बहादुरका शहीद भए भूमि चैनपुरको निजमा ।

गोर्खा सेना लिम्बुवानको बहादुरीमा पराजय भयो
घरको स्वीकार्य गरी गोर्खा सेना फिर्ता गयो
अरुण पूर्व लिम्बुवानमा विशाल लडाइँ भए पनि
गोर्खा सेना दुबैपल्ट हार खाई गए पनि ।

तेस्रोपल्ट सेनापति रामभद्र मगरलाई पठाइयो
त्यो सेनापति मगरले गहिरो विचार गऱ्यो
किरात कुलका लिम्बुवानसँग निश्चय हारिन्छ
बुद्धि अन्त भए मात्र युद्धभूमि खारिन्छ

सेनापति रामभद्रको चलाखी विचार आयो
गोर्खा राजाको निमेक पानीले आज मलाई यहाँ ल्यायो
रणभूमि लिम्बुवानमा गर्न मन छैन
किरातवंशका मगर लिम्बु कतै दबेको छैन।

लिम्बुवानका लिम्बु दाजुभाइ के गरुँ मैले अब
चिठी लेखी पठाएको छु उत्तर दिनु सबैले तब
लिम्बुवानका दाजुभाइको सबैको भलो होस्
गोर्खा राजाका सेना सबै फर्काउने निधो आओस्।

गोर्खा राजाको सेनापतिका पत्र विचारबाट
दश लिम्बुवान सत्र थुम्का थुम राजाबाट
सल्लाह राय निर्णय गरी सेनापति भाका
मगर जातका किरात कुलमा बाइहियात भयबाट।

हामी सबैले ठहर गरी तिमीलाई सल्लाह दिने
राजकाज सारा गोर्खा राजाले गर्ने हामी जमीन लिने
यति राय सल्लाहको पत्र पाएपछि सेनापति फर्के
गोर्खा राजाको शाहीसेना काठमाडौंमा खर्के।

पृथ्वीनारायण शाहको सामु
उक्त कुरा सबै गरी सेनापतिले लानु
राजाबाट विचार गरी अति खुसी मानी
लिम्बुवानले जमीन भोगी खानु आफ्नो जानी।

लिम्बुवानको लिम्बुहरू मेरा भाइ सो सरह
किपटीया जानी लिनु लिम्बुवान सार
तिमीहरूका जिमीभूमि कानुनी सब घर
भोग चलन गरिलिनु किपटीया सार।

आजदेखि लिम्बुवानको अम्मल मेरो भयो
भाइ सरह मेरो भयो यही सम्झौता रह्यो

नौ लाख किरात जस्तो तिमीहरू छैनौ
लिम्बुवान मास्ता मासिने कहिले हैनौ ।

दुबो ढुङ्गो पृथ्वीमा जहिलेसम्म रहन्छ
लिम्बुवानका शाखा सन्तान तबसम्म रहिरहन्छ
शाहवंशका राजासँग लिम्बुवानको कथा छ
आज आउँदै गरेका युग परिस्थितिलाई लिम्बुले सहेको छ ।

लिम्बुवानको अन्तिम घडी विचारनीय छ
सत्ताधारीहरूबाट कुन-कुन कुरोमा आदरणीय छ
आदरणीय नीतिलाई प्रतिपालन गर्नेछ
युगको चक्रबाट आएको समयलाई स्वीकार्नेछ ।

सत्य वाचा गरिकन लालमोहर दिए
तिमीहरूको जग्गा खोसेमासे लिए
बन्धु भङ्ग भई राज्य हरण होओस्
सत्य वाचा गरी दिए सत्य भई लागोस् ।

●

# महाजालको घेरा

पृथ्वीनारायण शाहसँग पूर्व क्षेत्रका किरातले
समझदारी कायम राखी प्रान्तीय सत्ता छोडी दिएकाले
लिम्बुवान क्षेत्रलाई छ्वानीमा राखे
शाह राजा दशआनीमा सदर भई बसे।

धार्मिकदृष्टि विचार राख्ने किरातकुलका लिम्बुवान
सत्र वर्ष युद्ध गरी लिए खम्बुवान
खम्बुवानलाई रैकार गरी लिम्बुवानलाई किपट
किपट जग्गा रैकार पार्न गर्न लागे दबाव।

जिम्मावालको धुनमा लागि राम्रा राम्रा जग्गा
रैकर बनाई सुभाङ्गीको मालिक बन्ने भाका
दश लिम्बुवानका दशै रिति दशै चलन खाका
रैकर जग्गा ब्राह्मण बाजे सुब्बा आफू भाका।

सत्र थुम्का लिम्बुवानमा क्रमिक रुपमा सुधार
जग्गा जति रैकर दिंदै बन्ने भए उदार
राम्रा राम्रा कार्यहरू केन्द्रमुखी सरकारलाई
तिते माछो, भीर मौरी, सिनोफानो लालमोहरवाला सुब्बालाई।

सत्ताच्युतका सुब्बाहरू गर्न अब थाले
भाइ सबलाई ठग्दैबग्दै ब्राह्मण बाजे पाल्न थाले
ब्राह्मण जाल देशैभरि सबै एकै खाले
भए अब सुब्बाहरू ब्राह्मणको पाले।



# किपटमाथि कुन्ठित गरियो

२०१७ सालको पञ्चायती सरकार
महेन्द्रलाई किपट मास्ने यिनै भयो दर्कार
नेपालको भूमिसुधार थापा भयो सरकार
किपटिया मुलुक सबै अब भयो खलाङखार ।

सूर्य थापाको चलाखी अति नै थियो
लिम्बुवानको किपट मास्ने नीति बनाई दियो
२०२३ सालसम्म किपट जग्गा पास हुँदैन थियो
०२३ सालको भूमि ऐनले पास हुने बनाई दियो ।

किपट जग्गा रजिष्ट्रेसन हुने चलन थिएन
वेरिङ, पैरङ बाजेप्रति पास गर्न लेना
२०२३ सालको भूमिसुधार ऐन
किपट जग्गा वोइरङ भयो अब सबका चयन ।

आज भए आदिवासी सबै सुकुमवासी
तिनै एक आत्मवादीका भए ढुकुमवासी
नेपालको भूमिपुत्र जतिखेर पनि दासी
आजको प्रजातन्त्रले दिन सक्ला के एकात्मवादलाई फाँसी ।

●

# राजा वीरेन्द्रको शासनमा

निरङ्कुश पञ्चायत भो भो भनी हिँड्ने
०४६ को जनआन्दोलनमा अघि सरी भिड्ने
लाटा सोझा भीडमा मर्ने नेता बाहिर छिर्ने
वीरेन्द्र राजदरबारमा बसी चरित्रहरू हेर्ने ।

भूमिगतमा रहिआएका ने.का. वामपन्थी
अरु पनि पार्टी खोली भए अनगिन्ती
संसदीय व्यवस्थामा विकास हुन्छ भन्थे
दरबारमा हाँक दिन पार्टीहरू जान्थे ।

आजको यो प्रजातन्त्रमा धर्मकर्म छैन
चेतनशील प्राणीको कुनै गुण रहेन
नेताहरू जति भए काम केही भएन
सस्तो भाषण सस्तो आसन केही अब रहेन ।

नेपालको भौगोलिक नै शोषणमा रहेको
नेपालका ठिनेमिने नेताले जति पनि गएको
शक्तिशाली छिमेकी राष्ट्रले सुनी बसिराको
विश्व सङ्घको प्रस्तावले घेरामारी राको ।

नेपालको अर्थतन्त्र विदेशीको भरमा
विकास गरौँ भनी हेऱ्यो पूँजी छैन साथमा
खनिज धातु अनगिन्ती नेपालको पाखामा
नेपालीको दिमाग बन्द भयो विदेशीको भाकामा ।

एकतन्त्र होस् चाहे बहुदल होस नेपालको नेताले
सर्वसाधारण गरीबमाथि भुक्याउने बेथाले
देश राष्ट्र दिन प्रतिदिन बिग्रँदो अवस्थाले
भ्रष्टचारी शोषकहरूको व्यथा कथाले ।

अस्त व्यस्त भइरहेका जनताहरूमाथि
भ्रष्टचारी नेताहरू गर्दैनन् दाया जनतामाथि
जतिसुकै दल खोलियोस् जतिसुकै नीति
प्रजातन्त्रबाट बञ्चित भई बाँच्न परेको छ कति ।

धेरै जाति धेरै धर्म रहेको यो भूमिमा
एक जातिवादको धर्म भाषालाई राष्ट्रिय धुनीमा
सजीसजाउ गरी राखेको छ यो प्रजातन्त्रको जुनीमा
यस्ता निरङ्कुशता हावीहरू जन्मैबाट खुनीमा ।

राष्ट्रको नेताहरू दिमागमा पट्टी बाँधी बसेका छन्
धर्म निरपेक्ष र समानुपातको कुरो बिर्सेका छन्
मानव अधिकारको कुरो गर्छन समानुपातिकले तर्सन्छ
धर्म निरपेक्षले त हिन्दूवादी बेहोस अब पर्दछ ।

यस्ता निरङ्कुश विचारका नेता जब बन्दछ
बहुदल व्यवस्थाको प्रजातन्त्रवादीहरू अलपत्र पर्दछ
सम्पूर्ण जातिपातिका समान अधिकार जसले भन्छ
राष्ट्र नेता प्रजातन्त्रवादीका नामले विभूषित हुन्छ ।

०४६ सालको संविधान निर्माणदाता सारा
आर्यकुलका बहुमतका अल्पमतका निर्मल लामा
धर्म निरपेक्षको प्रस्तावले आर्य कुलका सारा
यस्ता प्रस्ताव ल्याउने निर्मललाई भिकी दिउँकी क्यार ।

ब्राह्मणको हैकमले तर्सिएका अन्य जाति, वर्ग
आफ्नो निजी व्यक्तिगतको स्वार्थमा आर्यहरू हर्क

जातिवादी अस्तित्व जति छन् बनाउने भए नर्क
प्रजातन्त्रवादीसँग गर्छन् अनेक तर्क ।

आफू को हो कहाँ पुगेको छु जसलाई सम्झना छैन
त्यस्ता नेतावादीहरूमा विश्वास राख्नु हैन
विश्वमा शक्ति प्रदर्शन गर्दछन् ऐतिहासिक अस्तित्व
नेपालका आदिवासी स्वार्थवादमा लागि भएन अस्तित्व ।

देशका अङ्गरक्षक सबै समानुपातिकमा रहनु
सबै जातिपातिका धर्म भाषाले राष्ट्रको सहयोग पाउनु
देश सबै को हो सबै नेपाली जनता हुन् भन्ने भावना
अनि मात्र राष्ट्र बलियो र जनता एकता रहने संभावना ।

एकअर्कामा कन्जुस्याइँ किन गर्छौ नेपाली त हो नि
देशको उपभोग गर्न सक्ने सबको अधिकार छ नि
भन्दाखेरि शासकलाई धेरै हुने नभनी त नहुने भो नि
जनजाति महासङ्घका लपेटा खान्छौ कि कुन्नि ।

चेपाङ, दनुवार सतार आदि गाइने, जोगी पनि
थारु, धिमाल, चेमे, पोडे, दमाई, सार्की छ नि
हिन्दूवादका सामन्त व्यवहारले यस्तो दर्जा पाएको त हो नि
ए आर्य जादुगर तिम्रो अनुहार कालो छ कि गोरो छ कुन्नि ।

अर्काको आत्म जान्दछौ तिमी, तिम्रो आत्मा भने कस्तो छ
डाहा मार्ने सर्पको कला विषभन्दा पनि चर्को छ
तिम्रो अनुहार सारै लजिलो आत्मा भने विषालु
सङ्गत नगरी हिँडु भने दिलै तिम्रो रिसालु ।

तिम्रो अनुहारबाट डर छैन मलाई नीति तिम्रो खराब
नेपालको आर्यभित्रबाट जनजातिहरू जहिले पनि धराप
यो भूमिको इतिहासले कसको पायो सराप
हिन्दूवादका महाजालमा फसेकाले भयो आज खराब ।

राजा वीरेन्द्रका शासन यस्तै सेरोफेरोमा रहे
शासकका शासनलाई यस्तै वर्णनमा कहेँ
हिन्दू अतिवादमा वीरेन्द्रको जीवन थियो
वंश नासी ज्ञानेन्द्रले राज्य भार लियो ।

●

# अतिवाद

आफूले स्वार्थ लिनु छ भने दशहात पर तेर्सिन्छौ
स्वार्थ पूरा गरेपछि तिम्रो त्यो बानी कसरी बिर्सन्छौ
तिमी त नराम्रो हैन तिम्रा पुर्खाका धर्ममा छौ
बिर्सन अब पनि तिमीले नसके दर्जनमा पर्नेछौ ।

जीवनको जन्मदेखि अन्तिम मरणसम्म
छातीमा हात राखी भन अब जनताहरूमा जम्म
कति लुट्यौ कति भुट्यौ के के भऱ्यौ टम्म
ज्यान त तिम्रो चमेरे थियो भएको छौ त गम्म ।

आर्य ब्राह्मण धर्म हिन्दू भनी तिमीलाई
नचिने त भयौ न नि विश्व सामुलाई
तिम्रो कैरान कथा अब कहौ हामीलाई
समानुपातमा हेर्ने गर अब सबलाई ।

ए आर्य ! जातिपाति भेदभाव बनाउने हिजो आफै
आर्य भयौ अनार्यलाई शोषण गर्ने तिम्रो जातै
बनाएका छौ जातिपाति बसेका छन् जनजाति साथै
उनीहरूको आफ्नो सामाजिक इतिहास लिएका छन् तातै ।

घरमा बस्दा जातिपाति धर्म निरपेक्षको कुरो गर्ने
विदेश जानुपऱ्यो भने परिचित धर्ममा हिन्दू हुनुपर्ने
यस्तो दुई नम्बरको हिन्दू हुनुपर्ने बेथा
प्रजातन्त्रको मखुण्डो भिरेर जनजाति बाँच्नुपर्ने के त ।

ब्राह्मण क्षेत्री, वैश्य, सुद्र चार जात बनायौ
यिनै जाति वर्ग छुट्याई सुनियोजित गरायौ
ब्राह्मण भए वेदका धनी क्षेत्री लड्ने भयो
वैश्य जाति खेतीपाती अनि भारी बोक्ने गर्‍यो ।

सूद्र जाति पानी नचल्ने घृणित हुनुपर्‍यो
ब्राह्मणको हिन्दू धर्म आर्य नाच्न सर्‍यो
अढाई सयको रूपान्तरसम्म ब्राह्मण जालले खायो
शोषक ब्राह्मण रहेछ भनी बल्ल जनताले चाल पायो ।

मल्लकालको मल्ल राजा हिन्दू सामाजिकमा फस्यो
जाति वर्ग विभाजन गर्ने तरिकामा जयस्थिति मल्ल फस्यो
किरातवंश धार भए पनि अपभ्रंश हिन्दू भयो
नेवार नेवार भए पनि छुवाछूतको भेदभाव बढ्यो ।

आजका प्रजातन्त्रको हुरी छिरी गयो
यो हुरीबाट तिमीले बाँच्न अब फेरि परी गयो
आजको यो तुफान रोक्न त रोकिन्न तिमीले बुझ्नु
हैन भने जे भो सो भो अब भनी कम्मर कस्नु ।

●

# राजनीतिक दललाई कसरी हेर्ने

देशको राजनीतिमा सङ्कटकाल ल्याउने
ब्राह्मणवादी हावीहरू स्वार्थी सत्ता च्याउने
देशको विकास गर्ने भनी विभिन्न पार्टी ल्याउने
सर्वहारा जनजातिका मतलाई खिचातानी गर्ने ।

देशका शासकमात्र नभै शासन गर्न ताक्ने
ब्राह्मण जडले विचारलाई पनि फ्याँक्ने
माओवादीको नामबाट देशमा कोलाहल पार्ने
जनताको जनजीवनमा अस्तव्यस्त सार्ने ।

माओवादीका नेता आए प्रचण्ड बाबुरामे
सत्ताधारीहरू अघि बढी माओवादी हो कि भनी छामे
जनताको तरङ्ग विचारहरू सबै अभिशाप गरे
सोभ्का सीधा निमुखालाई गोलीका शिकार पारे ।

फौजी प्रहरीमा को को छन् भन्दा तिनै गरिबका छोरा
माओवादीका लालसेनामा तिनै गरिब मोरा
राजदरबार र सत्ता ताक्ने तिनै धनीका छोरा
जता फर्क्यो उतै देखिन्छ तिनै गरिब मारा ।

मर्नेबेला नेता मर्ने छैन, तिनै गरिब मर्छन्
हुकुम दिने एकात्मकवादीहरू मार्न सर्वहारा सर्दछन्
संसारमा विचित्र छ स्वार्थी काम गर्ने
लगाई दिएका छन् तिनीहरूलाई अमर शहीद हुने ।

आफू बाँचूँ र संसारमा नाचौँ भन्दै बस्छन् नेता
नेताहरू जमघट हुँदा अँगालो हाली गर्छन् भेट
सानातिनालाई खोजी खोजी मार्दा ठूलालाई रोजी के त
ठूला नेताको कुरा छैन दु:खीदाखीलाई घाँटीमा रेट ।

२०४७ ले ल्याएको बहुदल व्यवस्थामा
वामघटकहरू उत्रिए त्यो अवस्थामा
एमालेको नामले ठूलो पार्टी बन्यो
सर्वहारा गरिबको पार्टी हो यो भन्यो ।

एमालेको पार्टीले सत्ता सम्हाल्न पुगे पनि
सर्वहाराको उचित काम हुन नसकेको भनी
सर्वहाराको मखुण्डो लगाई सामन्ती व्यवहार गरे
माओवादीले त्यो देखेर पार्टी खोली अघि सरे ।

एक अधिकारवादी राजसंस्थालाई मान्ने
एमाले वाम घटकहरू सबै स्वार्थमै तान्ने
राजतन्त्रमा जातीय मुक्ति नहुने भनी
गणतन्त्रमा मात्र जनताको मुक्ति हुनेछ नि ।

एमालेले सर्वहाराको प्रतिनिधित्व गरेन
सामन्तवादी चरित्रका विचारमा पछि परेन
अर्ध सामन्तको नाइके बने एमाले अन्य वाम घटक
यसको प्रतिकार गर्दै जन्म भयो माओवादीको एक पटक ।

रोग, भोक, शोक आदिमा पीडित भएका नेपाली जनता
आफ्नो भाषा, धर्म जातिपातिबाट छट्पटाई बसेका छन्
चेतन विवेक भएका मानव भए पनि
एक आत्मवादको हैकममा बाँच्नु परेको छ नि ।

वर्ग मात्र शोषण नभै जातीय शोषण भएको
जातीयमुक्ति नभै वर्गमुक्तिको आवश्यक नरहेको

नेपाली आम जनताको ठहर भएकोले एक मात्र
संघीय लोकतान्त्रिक राष्ट्रिय मञ्च दलको एक मन्त्र ।

मेरो भन्ने भावना नभै हाम्रो भन्ने हुनुपर्छ
सामन्त विचार र घमण्डको अन्त्य गरिनुपर्छ
जातजाति, जनजातिको जनहितले मात्र
आजको नयाँ नेपालको निर्माणको हुनेछ पात्र ।

सङ्घीयवादीको यही ठहरले आएको पार्टी
हिजोसम्मको सामन्त भए पनि फर्कनु पर्छ साथी
सामन्तवादको विचारलाई अन्त्य गरिनुपर्छ
नेपाल नेपालीको हो भन्ने भावना जाग्नुपर्छ ।

सङ्घीयवादी पार्टीले बुझ्नुपर्ने कुरो धेरै छ अझै
आदिवासी जनजातिको मखुण्डो भिरेर मात्र मुक्ति हुँदैन कतै
मञ्च सम्बद्ध सङ्घीय पार्टीको ८ राज्यको खाका
जातीय मुक्ति मात्र नभई सम्पूर्ण नागरिकको भाका ।

माओवादीको पार्टीबाट जनता असमान थिए
सङ्घीय राज्यको हक र अधिकार केन्द्रित गरिलिए
नेपालको जातीय मुक्ति त्यस आधारले हुँदैन
मञ्चसम्बद्ध सङ्घीय नीतिलाई कुनै दलले छुँदैन ।

मेचीबाट महाकालीसम्मका जनता एक हौँ
मञ्च सम्बद्ध सङ्घीय मोर्चाको पार्टी मात्र एक हो
देश र जनताको हितमा आएको छ पार्टी
नेपाली आम जनताले बुझ्नु पर्छ साथी ।

●

# शान्ति क्षेत्रको प्रस्तावसँगै गए राजा वीरेन्द्र

राजा वीरेन्द्रको इतिहासमा जनताको आत्मा गाँसिएको छ
राजा वीरेन्द्रको साहस कुशल नीति जनतासँग राखिएको छ
राजा जनता को हो र जनता राजा को हो भन्ने नीतिलाई
कहिल्यै नबिर्सने इतिहास छाडिगए ०५८-०१-१९ का मितिलाई ।

नेपालका शान्तिप्रेमी राजा उही थिए वीरेन्द्र
अधिराजकुमारको पदवी त्याग गरी जनता भए धीरेन्द्र
आत्मचिर शान्ति पाउने बेलामा राजा घोषणा भए दीपेन्द्र
आदरणीय दाजुको राज्यसत्तामा आसिन भए ज्ञानेन्द्र ।

नेपालको राजनीतिमा कहाँबाट आयो हुरीबतास
दरवारमा कालो यमराजको साहसले पाऱ्यो अत्यास
राज परिवारको अन्त्यकालले देशमा पाऱ्यो बित्यास
राजा ज्ञानेन्द्रको अचानकमा बनी गयो इतिहास ।

राजा वीरेन्द्रको साहसले ११६ राष्ट्रको समर्थन मिल्यो
शान्ति क्षेत्रको घोषणा हुने बेला बहुदलले निल्यो
बहुदलका प्रजातन्त्रले राजा प्रजामा क्रोध साहस ल्यायो
देशका राजा जनता सबै बलीको बोका बनायो ।

आज आएको राष्ट्र नेताहरू स्वार्थमा कुर्लिएको
मीठो भाषण र मीठो स्वरमा नेताहरू उर्लिएको
बोली बोल्ने र दुई खुट्टा टेक्ने सबै नेतामा उत्रिएको
देशको भाग्यशाली नेताहरूबाट विदेशी ऋण थुपरिएको ।

ठूला देशका ठूलै चाला अभिमत हुन्छ धेरै
साना देशका सानै चाला हुँदैन गतिला सारै
आजका राजभक्त र देशभक्त चरित्रहीनका भए धेरै
कलिको मूर्तिहरू जो छन् आज बलि लिन्छन् धेरै ।

नेपालमा शान्ति क्षेत्र घोषणा भएको भए
भाग्यशाली नेपाली जनता हुने थिए दय
भारतबाट समर्थन नभएकोले प्रस्ताव बाँकी रह्यो
नेपालको बहुदलवादीले प्रस्ताव खारेज गर्‍यो ।

चीन र भारतको नेपाललाई हेर्ने दृष्टि कस्तो छ
चीनको समर्थन भए पनि भारतले डाह गर्ने जस्तो छ
भारतबाट नेपाललाई दबाव दिइरहने
दासको रूपमा नेपाललाई जहिले पनि हेरिरहने ।

राजा र बास भनेर मात्र हुँदैन कहिल्यै
भोगले ल्यांउने राजनीति युगको पालो संसारमा जहिल्यै
शान्तिको प्रस्ताव विश्वले दिए त्यै सत्ता रहन्थ्यो
अढाई सय वर्षको शाही भोग अझ बढेर जाने थियो ।

इतिहासका धनी किरातीहरू अस्ताएरै बस्थे
बहुदल मात्र नआएको भए झन् तल खस्थे
मूल आदिवासी जो अघि थियो जनजाति बने
फूलचरी जाति जो पछि आए राष्ट्रनायक रहने ।

शाही शासनकाललाई जीवित राख्न वीरेन्द्र राजाले
शान्तिको प्रस्ताव ल्याएका थिए ती निर्धा राजाले
बहुदलवाद र गणतन्त्र आस्था सपना मात्र बन्ने गर्थ्यो
बहुजाति र भाषी अलन्तर परी बस्नुपर्थ्यो ।



# राजदरबारको ऐतिहासिक घटना

०५८ जेष्ठ १९ गते ऐतिहासिक घटनाबाट
देशका जनता सबैका आत्मा रोइराको तथ्यबाट
राजारानी राजकुमारहरू छोरी श्रुति आर्यघाट
कस्तो घटना सोची नसक्नु भय कारणबाट ।

नेपाली जनताहरू घट्ने बेला सोची रहन्थे
राजा वीरेन्द्र जनतामाथि निर्णय गर भन्थे
०३६ सालको जन निर्णय नै जनअधिकार थियो
पुन: ०४६ को जनआन्दोलनले जनप्रजातन्त्र ल्यायो ।

सर्वसाधारण जनतालाई अन्तेष्टी दिन राख्छ
राजा वीरेन्द्रको सपरिवार नै हतारहतार फ्याँक्छन्
राजा वीरेन्द्रको सम्मान सत्कार अन्तर्राष्ट्रमा भन्छन्
त्यस्तो विशाल घटना हुँदा अन्तर्राष्ट्रले सुन्छन कि जस्तो गर्छन् ।

त्यो घटनाबाट भाइ ज्ञानेन्द्र केही शोकाकुल नभई
हतार-हतार गरी राजा बन्न सिंहासनमा गई
राजा हुने धुनमा मात्र लागिरहे कस्तो होला आत्मा
दाजुभाइको सपरिवार सकी आफ्नो परिवार मात्र साथमा ।

ज्ञानेन्द्रको त्यो आत्मालाई निष्ठुरी भने हुन्छ
राजदरबारको त्यो बीभत्स घटनाबाट सारा रोइरहन्छ
विश्वको सारा राष्ट्रमा नेपालको सन्देश सुन्दा
ज्ञानेन्द्रको निश्चय पनि शिर नझुकी रहँदा ।

सुनियोजित षड्यन्त्र दरबारभित्रै भयो
ज्ञानेन्द्रलाई राजा हुने खुसीयाली आयो
साख्य दाजु, भाउजू, भाइ, भतिजा, भतिजी
षड्यन्त्रमूलक घटना घटाई राजा हुनु उत्तेजित नि।

ज्ञानेन्द्रको हृदय कुन्नि कस्तो होला
राजगद्दी पाए पनि सारै राम्रो नहोला
देश विदेशलाई नाटक देखाए ज्ञानेन्द्रले
ज्ञानेन्द्र नै दोषी कहन्छ सबैको इन्द्रियले।

पारसेको उत्तेजना नै जनतालाई नसुहाउने
बडावा को वंश नास गरी चित्त नदुखाउने
नेपालले अब के के भोग्दै जाला
राजा हुने भोगविलास सपना हुँदै जाला।

जनताको जनचाहना बुझ्दैन क्रोध राजाले
माओवादीको सङ्ख्या ध्वनि बाजाले
मेची महाकालीको जनमत मन्दिरमा
गन्किदै आएको छ राजा फस्ने जाला गन्जीरमा।

●

# दरबारको हत्याकाण्डपछि

०५८ को जेष्ठ १८ गते राती
राजदरबारमा हुन गयो सारा नानाभाती
गिरिजा सरकार गठन थियो प्रज्ज्वल सेनापति
स-शंकित घटना घटाई सुतेनन दुबै राती ।

वीरेन्द्रको शासनकाल केही शान्त रहे
ज्ञानेन्द्रको राज्यसत्ता विद्रोह भई रहे
गिरिजा सरकार अस्तव्यस्तसँग अब रहे
कांग्रेसको विद्रोहबाट शेरबहादुर आए ।

देउवा सरकार शान्ति गर्न गठन फेरि भयो
शान्ति हैन बहुमतको सरकार नै ढल्यो
देशको धनजन दिन प्रतिदिन विग्रह भयो
असक्षम प्रधानमन्त्री पद्वी पाई गयो ।

लोकेन्द्रको मन्त्रिमण्डल राजदरबारबाट भयो
माओसँग वार्ता गर्न अब अघि बढ्यो
दुई पक्षका वार्ताटोली समानुपातिक थियो
असंवैधानिक सरकार भनी पाँच दलले अडान लियो ।

स्वार्थवादी नेताहरू पाँचदल अब भए
संसद पुनर्जीवित हुनुपर्छ भन्दै अब रहे
वार्ताटोली नगए पनि दुई पक्ष बसे
दुई चरणको वार्तालाई पूरा केही गरे ।

यता फेरि पाँचदलको उर्लिंदो आवाज
त्यसैबेला सूर्यबहादुरले खेल्न गयो कवाज
राजदरबारको दूरविनबाट हेर्न लागे रवाफ
लोकेन्द्रलाई आउन लाग्या राजीनामाको दवाव ।

सूर्य नेता राम्रो भनी प्रधानमन्त्री दियो
सूर्य, चन्द्र, ग्रह जति पार्टीबाट लियो
माओसँग वार्ता गर्न आफ्नो निधो थियो
तेस्रो चरण वार्ता गर्दै वार्ता नै खियो ।

स्वार्थीवादी पार्टीहरू शान्ति आन्दोलन गर्ने
शान्तिवार्ता भाँडेपछि डरले नै मर्ने
सूर्यशक्ति सेना माथि विश्वास गरी सार्ने
माओवादको निशान गरी जनता माथि पार्ने ।

अन्तराष्ट्र मङ्गलग्रह हेर्नलाई लागे
नेपालका नेताहरू जनता मार्न जागे
माओवादी संविधानसभा मागन तर्फ लागे
संविधान संशोधनकारी जुरमुरेर जागे ।

देशको अर्थतन्त्र जनजीवनमा भय पारे
दुई शक्तिको शक्ति भिडाई जनता अब मारे
ठूला नेता धनीमानी सुरक्षित बसे
तिनै गरिब अर्धहरू रणभूमिमा फसे ।

पाँचदलको कुर्लाई पनि हावामा नै जान लाग्यो
राजदरबारको अडानले सूर्य झन् जाग्यो
नेपालको प्रजातन्त्र कस्तो अनुहारको आयो
गरिबको जनजीवनमा अस्तव्यस्त ल्यायो ।

६० सालको चैत्र १८ गते देखि
पाँचदलहरू आन्दोलन गर्न निर्णय लेखी

संसद्‌को पुनर्वहालीको माग अघि सार्दै
थापा सरकार असंवैधानिक भनी गाली गर्दै ।

राजधानीमा जनआन्दोलनले सारा घेरे
आन्दोलनको १८ बुँदे मागलाई गृहमन्त्रीले हेरे
गृहमन्त्री माओवादीको चपेटाले गर्दा
उत्तेजितसँग गृहमन्त्री अगाडि सर्दा ।

काठमाडौंको तीनै शहर दङ्गाक्षेत्र घोषणा गऱ्यो
पाँचदलले दङ्गाक्षेत्र जबरजस्ती तोड्यो
माओवादको संकट घडी नसकिँदै फेरि
गृहमन्त्री कमल थापा आदि सबै हेरी ।

दङ्गाग्रस्त क्षेत्र अझ बढाई बार बार्न थाले
तीनै शहर चोकचोकमा बस्न लागे पाले
आन्दोलनका प्रदर्शनकारी डण्डी खान लागे
तीनै शहर गल्ली गल्ली दुङ्गामुडा फाले ।

मानव अधिकारको नीति नभएको भए
अप्रजान्त्रिक सरकारले गोली हान्न पाए
आन्दोलनका ती गरिब के कति मर्थे
सत्ताधारी पाखुरा सुर्की अगाडि पनि सर्थे ।

राजदरबारको भनाइ निर्वाचनमा जाने
आन्दोलनकारीको भनाइ संसद वहाली गर्ने
आ-आफ्ना अडान कति दिनसम्म लिने
यो अडानले पूर्व-पश्चिम मुख फर्काई दिने ।

थापा सरकार अडान लिँदै आयु लम्ब्याउने
राजदरबारको दर्शन भेटमा बोली सम्याउने
प्रधानमन्त्री खानको लागि राजभक्तको शब्द
कतिपय नेताहरूको सिफारिस बोली रद्द ।

राजदरबारबाट नेतालाई चाल्नाले चाले जस्तै
चाल्नमुनि पर्ने गए अडिनेलाई राख्दै
मन्त्री मण्डल तयारीको सङ्केत दिएजस्तै
स्वार्थी नेताहरूमाथि भ्रम पारी राख्तै ।

राजदरबारको पोलेसिमा कतिपय नेता
प्रधानमन्त्री भेटिन्छ कि भन्ने आसमा थे त
आन्दोलनकारीहरू राजादेखि टाढा
राजनेताहरूका अडान देखिन्छ धेरै गाढा ।



# प्रम सूबथाले दशा बिसाए

राजनीतिको खेलवाड गर्दै गर्दै
०६१ साल बैशाख २५ गते राजीनामा सार्दै
प्रधानमन्त्री सूर्यबहादुर थापा आफ्नो बक्तव्य दिँदै
आफ्नो कार्यकालको देश बिग्रँदो चालले बिदा लिँदै ।

गए प्रधानमन्त्री अब आउने हुन् को हो
राजदरबारको राजनीति चाललाई जोगाउने को हो
पाँच दलका नेता माथि शङ्काशङ्कै हुने
संसद पुनर्वहाली गर्ने हो कि चुनौतीमा जाने ।

माओवादीको दवावभन्दा पाँच दलको रवाफ
प्रधानमन्त्री सूर्यलाई नमिठो भयो कवाफ
राजदरबारको अडानले कस्तो दिने जवाफ
पाँचदलको अडानले बनाउने हो कि खुवाफ ।

राजदरबारको प्रसादी ग्रहण गर्ने थापालाई
माओवादीका चपेटाभन्दा पाँचदलका गराइ
आत्मघाती बिस्फोटनमा आफू परे जस्तै
राजदरबारको आशीवार्दलाई राजाउपर सार्दै ।

ठूला साना सबै पार्टी मिली देशको बिग्रँदो गतिलाई
सपारौं सबै कुरो हाम्रो बिग्रँदो मतिलाई
यस्तो समभ्रुदारी वचन दिँदै राजीनामा दिए
सबै आफ्नो गल्तीलाई क्षमायाचना गरिलिए ।



# स्वच्छ छविको खोजीमा चारहप्ता

सूर्यबहादुरको राजीनामापछि राजनीतिको गति
राजा उन्मुख भै अलमलमा बस्नु पऱ्यो कति
देशको सुशासन चलाउन सक्ने स्वच्छ छविको
खोज्ने अभियान चल्न गयो राजदरबारको ।

पाँचदलको आन्दोलनले खोजे संसद पुनर्स्थापना
राजदरबारको आशय संसद निर्वाचनमा जान
उता माओवादीलाई संविधानसभाको खोजी
जनताको आस निराश राजदरबारको रोजी ।

तरङ्ग त्रासैत्रासले गाँजेको छ नेपाललाई
संसद पुनर्वहाली र संविधानसभाले अत्यास छ राजालाई
स्वच्छ छविका नेताहरू जन्मेका छन् कि छैनन्
खोजतलासीमा दर्शनभेट चल्यो राजा समक्षमा हैन ।

भोकानाङ्गा नेताहरू राजा कहाँ मुख देखाउन लागे
स्वच्छ छविका मुखहरू हेर्न राजा पनि जागे
प्रधानमन्त्रीका उम्मेदवार दलहरूलाई मागे
तीन दर्जन जति नेताहरूको निवेदन आउन लागे ।

पाँच दलको सडक आन्दोलनले दिमागै खाएको
प्रधानमन्त्रीको उम्मेदवारी पाँच लिस्ट दिन पाँच दलले नभ्याएको
एकआपसको स्वार्थी विचारले आन्दोलनकारी गुमे
असक्षम पदवी लिएका शेरबहादुर राजामा पुनः झुमे ।

शेरबहादुरको प्रधानमन्त्री माग गर्ने अभियानले
स्वच्छ छविको जन्म हुन गयो राजाको अध्ययनले
कैले हुने असक्षम मन्त्री कहिले हुने स्वच्छ छविको
कस्तो जादुगर चस्मा छ होला राजदरबारभित्रको ।

काठमाडौंका सडकहरूमा गरेका ढुङ्गामुडा
कति नेताहरूका कति दङ्गा प्रहरीहरूका खुस्के घुँडा
मलम लाउन नदिंदै पाँच दलको अन्त्य भयो
प्रधानमन्त्री को हुने भन्दाभन्दै स्वार्थ त्यसै गुम्यो ।

शेरबहादुरको चाप्लुसीमा माधव नेपाल फसे
गिरिजा बाबु लड्डु खाने झोकमा थलो परी बसे
गिरिजा बाबुको रिसले शेरबहादुर नेपाल सङ्गम
सात समुद्रमा फस्न लागेको राजनीतिलाई जगाऊ ।

एमालेका माधव नेपाल संसद् पुनर्वहाली खोज्दथे
शेरबहादुर देउवा पनि घरीघरी संविधानसभा भन्दथे
राजदरबारको मन्त्रबाट दुबै शक्तिका नेता
सडकमा डुक्रिएको हावाहावामा नै गयो के त ।

राजदरबारलाई धम्की दिन संविधानसभा
शेरबहादुरको चलाखी नीतिले आज भए दङ्ग
हिजो संविधानसभाको कुरो गर्ने आज सकिँदैन
राजसंस्थामा झुकेपछि नेताको कुरो बुझिँदैन ।

शेरबहादुरको मन्त्रिमण्डल एक महिनाको बादमा
गठन भयो ३१ जना मन्त्रिमण्डल एमालेको साथमा
प्रजातान्त्रिक सद्भावना, रा.प्र.पा.र एमाले
मन्त्रिमण्डल गठन भयो स्वार्थ बलको पाले ।

शेरबहादुर पैले भुक्थे संविधानसभाको कुरो
प्रधानमन्त्री पाएपछि संविधानसभा भुल्यो

चार दलको संयुक्त साझा नीति भनी ल्यायो
माओवादीको मागलाई फेरि त्यतिकै ख्यायो ।

एमालेका नेता माधव नेपाल भन्न लागे फेरि
मन्त्रिमण्डल ठूलो भयो एकतीस जना हेरी
सत्ताइस जना मन्त्रिमण्डल गठन गर्ने निधो
पाँच जना थप भयो कुन सूत्रको सिधो ।

उपप्रधानमन्त्री भए एमालेका नेता
देशमा शान्ति ल्याछौँ भन्छन् प्रचण्ड मान्छ कि के त
माओवादीको सबै एजेन्ट ल्याउनु पर्छ अघि
सबै एजेन्ट छलफल गरी मिलजुलमा लगी ।

देशमा ल्याउने शान्ति शासन भन्ने वचनबद्धे
राजालाई सन्तान दिलाउने भाषणको अड्डे
माओवादीले संविधानसभाको अढान छोड्ने भएन
राजसंस्थालाई संविधानसभाले आत्मशान्ति दिएन ।

राजसंस्थाको आशीर्वादमा बाँच्ने मन्त्रिमण्डल
जनता बीचमा देखिन गए कङ्गालको चण्डाल
देशको शासन भएपछि जनता बीचमा बाँच्ने
नेताहरू जन्मिएनन् राजसंस्थामा नाँच्ने ।

राजसंस्थाका मन्त्रीहरू स्वार्थी भए अब
शान्तिवार्ता आउने भएन संविधानसभाको कुरोले जब
जनमत दिन नचाहने राजदरबारभित्रबाट
नेपालका जनताहरू हुनपुगे दुई शक्तिको फाँट ।

प्रजातन्त्रभित्र रही संविधानसभा दिने
बहुदलले संविधानसभा गराई लिने
निरङ्कुश शासन कुनै पक्ष नरही
स्वतन्त्रता जनता माझ सबलाई दिलाई ।

मानवको बाँच्ने अधिकार स्वतन्त्र हुन पर्‍यो
निरङ्कुश विचारको नीति सबै ढल्न पर्‍यो
दानवको चरित्रता त्याग्न सक्नुपर्‍यो
एकशक्तिलाई विहीन गरी बहुशक्ति ल्याउनु पर्‍यो ।

चार दलको ३४ बुँदे सन्धि कता गयो
शान्तिवार्ता गरिकन चुनाव कस्तो हुने भयो
चारदलको स्वार्थ बन्दी हावामा नै जाने भयो
ज्यान धनको असुरक्षित दिन दिन बढ्दै गयो ।

प्रधानमन्त्री कुर्सी टिकाउन आतुरीमा रहे
उपप्रधान भरतमोहन कुर्सीमा नै सीमित भए
मन्त्रिमण्डल तलब भत्ता त्यसै खेर गए
स्वार्थवादी नेताहरू अब त्यसै रहे ।

●

# दोहोरियो शाही घोषणा

२०६१ को माघ १८ गते
देउवा सरकार पुनः ढल्ने भए तथ्य
कहिले हुने असक्षम त कहिले हुने सक्षम
अब आयो भ्रष्टचारीको लक्षण ।

शाही घोषणा भएपछि १० मन्त्री गठन भयो
मन्त्रिमण्डलको अध्यक्षमा राजा आफैं गयो
पञ्चायतका मण्डलेलाई उपाध्यक्ष ल्यायो
डा. गिरी, विष्टसहित दुई उपाध्यक्षमा ल्यायो ।

शाही मण्डलेको मन्त्रिमण्डल अनौठो त छैन
राजनीतिक पार्टीहरू स्यालको कथा भएन
संचारमन्त्री टंक ढकाललाई तानियो
राजदरबारका पहरेहरू अरु पनि छानियो ।

शाही घोषणाले दलहरू सबै
नजरबन्दी पर्न थाले रहेनन् दबाई
शाहीआयोग गठन भयो भ्रष्टचारीलाई
कारबाही गर्न लागे शाहीआयोग अत्याचारीलाई ।

बहुदलीय व्यवस्थाका मन्त्रिमण्डलहरू
नरहने भए अब भ्रष्टचारीहरू
ठूलाठूला हाँक गर्थे प्रजातान्त्रिक मन्त्री
भ्रष्टचारीको लाइनमा उभिन पुगे जन्ती ।

पञ्चायती प्रणालीका मन्त्रिमण्डलमाथि
गालीगलौज गर्दै हिँड्ने भ्रष्टचारी साथी
बहुदलका १५ बर्ष कार्यकाललाई हेर्दा
भोका, नाङ्गा, भूमिगतका सबै दलका कार्यकर्ता।

प्रधानमन्त्री शेरबहादुर त बाँकी रहेनन्
खड्ग ओलीजस्ता अन्य नखाने त भएनन्
भोट माग्दा गल्लीगल्ली विकास गर्छौं भन्थे
संसदबाट मन्त्री भएपछि बजेट प्रतिशतले गन्थे।

टुहुराका छोराहरू सांसद भए जब
ताज महलहरू जोड्न पछि परेनन् तब
करोडौंको नाम लाग्यो शेरे, प्रकाशलाई
शाहीआयोग अनियमित भन्नेहरूलाई।

खोजीखोजी कारबाही गर्न पछि परेनन्
आयोगमाथि अनियमितको कारबाही गर्न डराएनन्
सर्वोच्चको न्यायलयमा मुद्दा दायर भयो
संविधानमा शाहीआयोग गठन गर्न नभएको आयोग त्यसै गयो।

नजरबन्दी, भ्रष्टचारी मन्त्रीहरू सबै
सर्वोच्चको फैसलाले गर्न लागे रुवाई
आयोग गठन राजा ज्ञानेन्द्रको व्यक्तिविचार थियो
गठनलाई अनियमितको फैसला गरिदियो।

भए बाबा सर्वोच्चको न्यायाधीश अब
भ्रष्टचारीहरू जुर्मुरेर उठे तब
ज्ञानेन्द्रको सरकार ठूलाठूला स्वरले
साँढे, बोकाजस्तै देखिन थाले घोर्ले।

माओवाद र सातदलको गठबन्धन हुन लाग्यो
पूर्व-पश्चिम नेपालीको कुहिरोमण्डल जाग्यो

१२ बुँदे सम्झौताले दरबार हल्लन लाग्यो
घोर्ले बोकाहरू कुर्लीकुर्ली गल्ली रोक्न लाग्यो।

गल्लीगल्ली लोकतन्त्रको नारा घन्कियो
राजभक्त र देशभक्तको प्रतिस्पर्धा गन्कियो
दरबारदेखि गाउँ, गाउँ यो रोग सल्कियो
ठाउँठाउँमा शहीदहरूको रगत झल्कियो।

लोकतान्त्रिक गणतन्त्रको भाषणको भाषणले खायो
संविधानसभाको नयाँ नेपाल बनाउने मौका पायो
राजा ज्ञानेन्द्रको लिँडेढिपी थियो
०६३ को वैशाख सात गते आयो।

ज्ञानेन्द्रले जनताको नासो जनतालाई दियो
फुच्चे खेल मात्र थियो राजदण्ड आफैं लियो
सातदलको दरबार घेराउ झन् तात्तियो
११ गते मध्यरातामा राजा झन् आत्तियो।

जनताहरू भातेनिन्द्रा राजा घोषणामा
राजशक्तिको आयु आउने हो कि जाने दोसाँधमा
राजपरिवारको चहलपहल जनता तर्सिने
देशको आर्थिकभार सबै राजतन्त्रमा खर्चिने।

पञ्चायतको बाबु आए भन्थे जान्ने सुन्ने
राजदरबारको शासनहरू खर्च भको गुन्ने
राजदरबारका भण्डारेमा मन्त्री पनि थियो
राजशक्तिलाई बलियो बनाउनमा रकम पनि लियो।

०६३ वैशाख ११ गते
संसदको पुनः स्थापनाको तथ्य
राजाबाट आएको घोषणालाई हेरी
रोकिन गयो नेपालको राजनीतिक आँधीबेरी

१८ दिने आँधीबेरी सातदल मात्र थिएनन्
माओवादी आत्मबलमा बाहिर भाग लिएन
राजतन्त्रमा सहयोग दिने अन्तर्राष्ट्रहरू
बखतबखतमा भाका फेर्न बाध्य भए बरु।

नेपालका नेपालीले आत्मबली दिए
नयाँ नेपालको नक्सा लिन नेपालीले पाए
नेपालको ८० प्रतिशतका जनता
आदिवासी दलित भई अपाङ्ग छन् त।

यिनै अपाङ्ग नेपालीको आवाज घन्कँदा
अवसरवादी नेताहरू आवाजमा ढल्कँदा
राजदरबारदेखि अन्तर्राष्ट्रसम्म हल्लियो
संविधानसभा हुने हो कि नहुने हो बलियो।

नेपालको नयाँ सरकार गिरिजा प्रधानमन्त्री
छक्क परे अन्तर्राष्ट्र नेपाली जनताको तन्त्री
राजदरबारको मण्डले सबै अब भागे
सात दलका श्रेष्ठहरू अब जागे।

सात दलका नेताहरू ठूल्ठूला कुरा गर्दा
बन बस्ने माओवादीले आँखा तरी हेर्दा
बाघ मार्ने अर्कै रैछ जुँगा तान्ने मात्र
देखाएको रहेछ सात दलले जात्रा।

माओवादी प्रचण्डले तीन महिने युद्धविराम
घोषणा गरी दिए सात दलका सरकार नरम
माओवादी सङ्घर्षमा बाह्र वर्ष रहँदा
नेपाली जनताको रगत खोला बग्दा।

नेपालआमा रोइरहँदा कस्तो भयो होला
दुई शक्तिका नेताहरूले कस्तो सम्झे त्यसबेला

मर्ने बेला दु:खी दरिद्र नेता हुने ठूला
राजनीतिमा यस्तै हुँदो रैछ नेतालाई खुल्ला ।

माओवादी सात दलबीच वार्ता शुरु गरे
२५ बुँदे सम्झौतामा निर्णय गरी सरे
माओवादी खुलस्तमा सार्वजनिक भए
प्रचण्ड र बाबुराम काठमाडौँमा आए ।

सबै खाले नेतासँग भेटवार्ता गरे
नयाँ नेपाल बनाउनेमा प्रस्ताव अघि सारे
संविधानसभा गरी गणतन्त्र ल्याउने
लोकतान्त्रिक सङ्घीय सरकारको गठन नीति ल्याउने ।

०६३ वैशाख ११ को घोषणाले
राजा ज्ञानेन्द्रको अन्तिम भयो त्यो भाषणले
चार बर्षे निलम्बित संसद पुनर्वहाली भो
त्यो बहालीका संसदबाट राजा निलम्बित भो ।

राजा ज्ञानेन्द्रलाई त्यो दिन भयो सङ्कटको
दुई सय पचास वर्षको इतिहास सकिँदाको
गिरिजा सरकारको आदेशमा अन्तरिम संविधान
त्यो संविधानबाट ज्ञानेन्द्रलाई हुने भयो निलम्बन ।

नेपालमा नयाँ शासन आउन लाग्यो जब
जनताको शासन आउन आँटी हाल्यो अब
दुई वर्षको अवधिमा संविधानसभा हुने भयो
०६५ को जेठ १५ गते ज्ञानेन्द्रको अन्त्य भई गयो ।

नारायणहिटी दरबारलाई छाड्न बाध्य भयो
नागार्जुनमा आश्रम गरी बास बस्नु पर्‍यो
०५८ को दरबार घटना बाँकी अझै रहयो
ज्ञानेन्द्रको आत्मालाई सन्तोष नहुने भयो ।

●

# नयाँ नेपालको नयाँ अनुहार

०६४ को चैत्र २८ गते
संविधानसभाको चुनाव हुने भयो तथ्य
२४० उमेद्वार विजय भए
३३५ समानुपातिकमा मनोनित गए ।

मन्त्रिमण्डलको आदेशमा २६ जना मनोनित रहे
संविधान सभासद्मा छ सय एक जना भए
छ सय एक मध्येबाट राष्ट्रपति बन्ने भए
रामराजा सिंह र डा. रामवरण यादव उम्मेद्वार भए ।

डा. रामवरण यादवले विजय गरे
गरिब जनताको छोरो राष्ट्रपति बनी अघि सरे
नयाँ नेपालमा नयाँ अनुहार आयो
लोकतान्त्रिक गणतन्त्रले राजा बासा खायो ।

जनताको जनचाहना बोकेको माओवादी पार्टी
वहुमतमा आएकोले मन्त्रिमण्डल हुने भयो साथी
सामन्तवादको पार्टीलाई आक्रोश आउने भयो
सरकार गठनमा विरोध जनाई अल्पमतमा गयो ।

एक जातिवादी राजा ढल्यो सामन्त ढलेन
नेपालीले अझै बुझ्नुपर्ने भयो सामन्त जलेन
नेपालको सामन्तले गरिबलाई उद्दार गर्ने छैन
सामन्तको विचारबाट नफर्की नेपाली हुँदैन ।

सामन्तको उम्मेदवार शेरे देउवा आयो
समाजवादको उम्मेदवार प्रचण्ड गयो
प्रधानमन्त्री चुनावले प्रजातान्त्रिक जनायो
जनचाहनाअनुसार प्रधानमन्त्री प्रचण्डलाई बनायो ।

संविधान निर्माण सरकार भएका छन् आज
साना ठूला सबै दलको मन्त्रिमण्डल साज
सामन्तको अवशेषलाई उठाउन खोज्ने पार्टी
प्रतिपक्षमा अवशेष नेपाली कांग्रेसले बिगार्छ कि साथी ।

नेपालका जनजाति-जातजाति संगठन
संघीय राज्य विस्तारका भागीदार संगठन
गोलबद्ध भएर संविधान निर्माणलाई
सहयोग गरौँ चनाखो भएर सबै दाजुभाइ ।

●

# शाहवंश किन अस्ताए

नेपालको भूमिमाथि धर्मकर्म सत्य छ
सत्य ग्रहण गरेकोमा भोग्नुपर्ने तथ्य छ
हिन्दू आर्य आएका २०६५ वर्ष भयो
यो भूमिका आदिवासी सबलाई खाइदियो ।

नेपालको पश्चिमको कर्णालीक्षेत्रबाट
नेपाल खान शुरुआत गरे ब्राह्मण जालबाट
शाहवंशी मुस्लिमधारीसँग अकाट्य रहे
नेपालको उपभोगमाथि सम्झौता कहे ।

बस्थे यहाँ आदिवासी किरातकुलका
वंश विकास धेरै भई धेरै भए थरका
नेपाललाई भागी अंश गरी बस्थे जहाँ
हस्तक्षेपको शुरु हुन गयो अब त्यहाँ ।

क्रमिक विकास भयो हिन्दू आर्यको
शासक बन्यो खान थरका शासन गर्ने ब्राह्मण
एवम् तहमा पछिबाट गोरखा आइपुगे
मल्ल शासनमाथि धर्ना दिनु पुगे ।

किरातको ठूलो सङ्ख्या मगरहरूलाई लिई
आर्यथरहरूमा विभूषित गरी मगर फुटाई दिई
लडाकु सुरवीर, थापा, बुढाथोकी, लामिछाने
मगरहरूलाई ती वीरजातिका थरहरू भिराई दिने ।

सोभ्‍का मगर, गुरुङहरू आफ्नो पहिचानलाई
वीर गोर्खाली हुनेछौ तिमीहरू भनेकोमा भुल्याई
किरातवंशका अन्य प्रान्तीय राज्यमाथि हमला गरी
किरात किरातको बीचमा शक्ति भिडाई आर्य अगाडि परी।

जालभ्‍केल सार गरिकन मल्ल राजा खाए
पूर्व क्षेत्र लागेका किरातहरूमाथि अब जाग्न पाए
धेरै वर्ष खम्बुवानसँग भिडन्त गरे
खम्बुवानलाई प्रस्ताव गरी लिम्बुवानतर्फ सारे।

लिम्बुवानको चैनपुरमा अरुण कोशी तरी आए
लिम्बुवानको वीर पुरुष काङ्सोरे जहाँ थिए
तीनपल्ट युद्ध गरे तिनै पल्ट हारे
युद्धबाट नसकेपछि शरण पर्न अघि सरे।

लिम्बुवानका शासकहरू इमान्दारी थिए
शाह राजा पृथ्वीनारायणको शरणलाई माफी दिए
लिम्बुवानको भूमि जति थिए आफ्नै हकमा रहने
नेपालको देउ-देउता भाकी सत्य वाचा गरिरहने।

शाह राजा पृथ्वीनारायणले वाचा बन्धन गरे
लिम्बुवानको भूमिलाई हस्तक्षेप नहुने भनी सरे
यदाकता मेरो वंशले खोसी मासिदिए
बन्धु भङ्ग भई राज्यहरण होस् भनी वाचा गरिलिए।

यो वाचा बन्धन खेलाची त थिएन
महेन्द्र र उनको छोराहरूले यो कुरो चिनेन
शाही राजाको वाचा बन्धन सारा मकिए
लिम्बुवानलाई सके भने तर आफैं सकिए।

शासक थिए शाहवंशी शासन गर्ने ब्राह्मण
ब्राह्मणलाई पनि शासन गर्ने बिदाको हुँदैछ तर्पण
ब्राह्मणले बिदा लिने बेला आउँदैछ अब
किरातको शाखा सबै जाग्ने भए तब।

●

# नेपालमा दुई शक्तिको ऐतिहासिक अंक

सूर्यवंश धारका राजाहरू किरात सभ्यताका तब
किरात सभ्यतामा पर्नेहरू लिच्छवी, वर्मदेव मल्ल जब
चन्द्रवंशी राजपुतहरू आर्य खलकका पर्छन्
भट्टराक ऋषि राजाको वंशधार चन्द्रवंशी राज गर्छन् ।

वर्म, देव, मल्ल, लिच्छवी, किरात सूर्यवंशको
आए पछि आर्य कुलका चन्द्रवंशको
नेपालको वर्ष सम्वत् २ चरणको
किरात वर्ष ५०६८ छ भने आर्य २०६५ को ।

जुन शासकले शक्ति अभिनय गर्छ उसको वर्ष गणना बन्छ
किरात, लिच्छवी, वर्म, देव, मल्ल यसै कुराले झुक्छ
वर्तमानकाललाई आर्यकालीन सभ्यता जनिएको छ
विक्रम सम्वत् २०६५ साल भनी सबैमा गनिएको छ ।

भट्टराक, राणाजी, राव खान हुँदै शाहमा आए
आर्य कुलका नेपाल आगमन भट्टराकबाट भए
आजका विक्रम सम्वत् भट्टराकबाट जोडिएको छ
किरातकालीन साल सम्वत् बीचमा तोडिएको छ ।

कुलमण्डनको पालाबाट शाह भई घुसे
आदिवासी किरातवंशलाई अभिशाप गरी लुसे
शाही वंशी भएका खान खाँका सन्तानहरू
हिन्दू अतिवाद भएर बस्नुभन्दा मुस्लिम नै बन्नु ।

कुल मण्डनबाट शाह सुर भई बीचमा आए
भोगको कुरो हुन्छ (शिव) वंश नास गर्दै गए
लोभको मोह माथि डुब्छ भमरा पनि
अन्त्य हुन पुग्छ मोहभित्रै त्यो पनि ।

लोभमा क्रोध बनी वंश नास गर्न पछि परेन
राजकाज पूरा गरी राजतन्त्र किन तरेन
कुबाट सुर भयो ज्ञामा अन्त्य भै गयो
आकस्मिक शाही मुस्लिम राजा अन्त भयो ।

वंशनास अति हुन्छ शक्ति स-परिवारमा गुम्छ
बैरी शक्ति र दैवीशक्तिको खेलवाडी झुक्छ
यस्तै वंशनाश राजाहरू जो थिए
जनता र आफ्नो भोगले बिदा पनि दिए ।

●

# प्रचण्डको उदय

जनताको जनचाहना बोकेका पार्टी
बहुमतमा आएकोले मन्त्रिमण्डल हुने भयो साथी
सामन्तवादको पार्टीलाई आक्रोस आउने भयो
सरकार गठनमा विरोध जनाई अल्पमतमा गयो।

एक जातिवादी राजा ढल्यो सामन्त ढलेन
नेपालीले अझै बुझ्नुपर्ने भयो सामन्त जलेन
नेपालको सामन्तले निर्धालाई उद्धार गर्ने छैन
सामन्तको विचारबाट नफर्की नेपाल बन्दैन।

सामन्तको उम्मेद्वार शेरबहादुर आयो
समाजवादको उम्मेद्वार प्रचण्ड गयो
प्रधानमन्त्री चुनावले प्रजातान्त्रिक जनायो
जनचाहना अनुसार प्रधानमन्त्री प्रचण्डलाई बनायो।

संविधान निर्माण गर्ने सरकार भएका छन् आज
साना ठूला सबै दलको मन्त्रिमण्डल साझा
सामन्तको अवेशषलाई उठाउन खोज्ने पार्टी
प्रतिपक्षमा बसेर कांग्रेसले संविधान बिगार्छ साथी।

नेपालका जातजाति जनजाति सङ्गठन
सङ्घीय राज्य विस्तारका भागीदार सङ्गठन
गोलबद्ध भएर संविधान निर्माणलाई
सहयोग गरौं चनाखो भएर सबै दाजुभाइ।

बिहानको सूर्य किरणझैं माओवादी झुल्किए
राजशक्ति र महासामन्त शक्तिबाट बल्ल उम्किए
जनचाहनाको मूल मार्गलाई अगाडि सार्दै
एकाधिकारवादी र सामन्तवादलाई पासोमा पार्दै ।

नेपालको राजनीतिमा माओवादी एजेण्डाले खायो
सामन्त र अर्धसामन्तलाई घुमाई घुमाई दायो
२५० वर्षको राजतन्त्रलाई आर्यघाटमा सेलायो
सामन्तवादका नाइकेहरूलाई विस्तारै खेलायो ।

गणतन्त्र ल्याउनलाई संविधानसभा चाहियो
माओवादी विचारले स्वतन्त्रता पाइयो
जसले जे भने पनि नयाँ नेपालका दाता
माओवादका विचार र सिद्धान्त नै भाका ।

जातिपातिलाई भेदभावको अन्त्य गरी छाड्ने
आदिवासी जनजातिको मुक्ति हुने कार्य सार्ने
सङ्घीय राज्य विस्तार गरी जातीय मुक्ति दिने
संविधान निर्माणमा जनजातिको सबै कुरो लेखिदिने ।

नेपालको जातीय विभेदलाई अन्त्य गरी छाड्ने
सबैखाले नेपाली जनताको हक अधिकारलाई सार्ने
जनताका जनहित कार्यहरू खोजी खोजी गर्ने
सामन्त र अर्ध सामन्तलाई निर्मूल गरी फाल्ने ।

प्रचण्डको सत्ताकालीन उदय भएको छ
सामन्त र अर्धसामन्तले दृष्टि दिइरहेको छ
सत्ता वहालीको लगत नै तीन शक्ति राष्ट्रसँग
मैत्रीपूर्ण समाधानले भए अरु दल दङ्ग ।

विश्वको महाराष्ट्रहरू यिनै मुलुक पर्दछन्
ती भ्रमणको उद्देश्यरहित विकास अघि सर्दछन्

आतङ्ककारी सूचीमा नाम परेका माओवादी
अहिले आएर विश्वका आँगनमा परिचित भयो साथी ।

माओवादी राजनीति शान्तिपूर्वक जाने
सबैखाले जातीवादलाई अन्त्य गरी लाने
नेपालको माओवादी विचार विश्वमा नै फरक छ
अहिले विश्वमा नै यसैको अति तडप छ ।

●

# राष्ट्रिय झण्डाको परिचय

नेपालको इतिहासले सबैखाले वर्णन गर्दछ
मानव प्राणीको इतिहासको पहिचानलाई अगाडि सार्दछ
कुनै जातिवादीका हैकमी इतिहास जस्ताको तस्तै
त्यस्ता एकाधिकारवादी र सामन्तहरूको मुटुलाई छुँदै ।

शक्ति प्रदर्शनको ऐतिहासिक कुरो चित्त दुखाउन हुन्न
जस्ताको तस्तै नलेखेमा कसैको इतिहासलाई छुन्न
ऐतिहासिक कवितासङ्ग्रहले यही कुरो पोख्दछ
नेपालको ऐतिहासिक बिम्बहरू यिनै कुरो खोल्दछ ।

धेरै कथा व्यथाहरू लेखिएको भए पनि
राष्ट्रिय भण्डाको बारेमा लेख्न बाँकी छ नि
ब्रह्माजीको सृष्टि चन्द्रवंश भए
शिवजीको सृष्टिमा सूर्यवंश रहे ।

ब्रह्माजीको सृष्टिकला समुन्द्र तटमा भए
शिवजीको सृष्टिकला हिमशृङ्खलामा रहे
दुवै शक्तिका सृष्टि सिर्जनले नेपाल भोगेको छ
तिनै इतिहास राख्नलाई राष्ट्रिय झण्डा बनेको छ ।

नेपालमा प्रथम आगमन कैलाशपति शिवजीका थिए
उनकै वंशधारका किरातले सूर्य अङ्कित झण्डा लिए
किरातकालीन नेपालको प्रथम सभ्यतावासी हुन
आर्यवंश कुलको आगमन पूर्वका सबै किरात वंशधार हुन् ।

यो कलियुगमा किरात वंशधारहरू ५०६८ वर्षमा छन्
यो भूमि नेपालमा आर्य वंशधार आएका २०६५ वर्षमा मात्र छन्
यिनै दुईशक्तिको राष्ट्रिय सङ्केत हो सूर्य चन्द्रहरू
राष्ट्रिय झण्डाको वर्णन गरिएको छ अरु।

नेपाल र नेपालीको अस्तित्वको पहिचान सूर्य, चन्द्र छ
मानव सृष्टिको कथा व्यथा यसैले बोकेको छ
संसार भरका मानव समाज यिनै दुई धारका हुन्
आ-आफ्ना पहिचान बचाउन लागि राखेको घाम जून।

शाही राजाको रुपैयाँ नोटमा पंक्षीको चिन्ह छ
लिम्बुवानसँगको सहमति अनुसार आ-आफ्नो छाप चिन्ह छ
चन्द्रवंशी गोर्खा राजाको सेना बन्दुकसँग
सूर्यवंशी किरात लिम्बुवानको धनुवाणसँग।

राष्ट्रिय चिन्हमा गोर्खा राजाको गाई राखी दिए
किरात लिम्बु राजा तर्फबाट डाँफेचरी राखी लिए
बीचमा अरुण नदी सिमाना साक्षी राखी
किरातको सूर्य चिन्ह र गोर्खा राजाका चन्द्र राखी।

राष्ट्रिय झण्डा खडा गर्ने दुई शक्तिको सल्लाहबाट
शिरमा मकालु र राष्ट्रिय मुकुट कायम गरेबाट
किराती लिम्बुवानसँग गोर्खा राजाले सन्धि गरेको छ
सन्धि कै कारणबाट किरात लिम्बुवान भूमि किपट भएको छ।

गोर्खा राजा दश आनामा बसे ६ आनीमा लिम्बुवान
ताम्रपत्र लाल मोहरहरू सन्धिका आधारहरू छन्
२०२१ सालको भूमि ऐनले लिम्बुवानलाई मासे
२०३२ सालको भूमि नापीले लिम्बुवानको सारा खोसे।

दुईशक्तिको जुझारु सेनाको साङ्केतिक चिन्हले देखाउँछ
यिनै प्रमाणित आधारहरूबाट आ-आफ्ना इतिहास लेखाउँछ
आजका शक्तिवान् दलहरूले यो कुरा बुझ्न जरुरी छ
यो अन्त्य भोगमा आएको युग हो अस्तित्वको सङ्घर्ष जरुरी छ।

●

# दश वर्षे जनयुद्धको पीडा

जनआन्दोलनको बेला सहारा को हुन्थे
लालसेना र शाही सेना पालो पालो डुल्थे
गाउँघरका जनजीवनमा तहसनहस हुन्थे
कसले के भन्छ कसले के सुनाउँछ अनाहकमा खाउँलाझैँ गर्थे ।

राजा बस्ने दरबारमा माओवादी बस्दथे जङ्गलमा
जनजीवनमा अस्तव्यस्त ल्याउने गर्थे अनाहकमा
दुई शक्तिका मानिसहरू सुराकी गर्दै हिंड्थे
विचरा ती गरिब जनताहरू अब कसरी बच्थे ।

शाही सेना गस्ती गर्थे गाउँगाउँमा जाँदै
डाँडाडाँडामा भेला भई मोजमस्तीले खाँदै
सुरक्षाकर्मीको नाममा खर्च दिएकै हुन्थ्यो
सुराकीको नाममा कतिपय ती जनतालाई भुटेथे ।

दुईशक्तिको आन्दोलनमा हजारौँ हजार मरे
सिंहासनमा बसेर ज्ञानेन्द्र राजाले के गरे
जनआन्दोलनको विषयलाई सुन्न नसकी
जनताको आशय विचार के छ बुझ्न नसकी ।

देशका राजा भएर बाँच्न सदा धिक्कार थियो
१० वर्ष जन आन्दोलनले जनतामा जरजर ल्यायो
सानातिना गाउँघरको अनमेल झैँझगडा
माओवादीका कार्यकर्ता अनाहकमा झिक्ने बखडा ।

पार्टीका सैद्धान्तिक सिद्धान्त जनतालाई थाहा छैन
पार्टीका कार्यकर्ताले प्रस्ट जनतालाई सुनाउने हैन
धम्काई र झम्ट्याईमा जनता सबै तर्सिए
कतिपय साधारण जनता बोकाझैँ पर्सिए ।

बाटोमा हिंड्यो सैनिकले पछ्याउँदै धम्क्याउने
घरमा बल्ल पुग्यो माओवादी सेना झन्किने
दुई शक्तिको पीडा नेपाली सारा जनताले सहेका
दुर्दशाहरू ती निमुखा जनताले भोगेका ।



# खटपटीमा परेका ज़नजातिहरू

२०४६ को जनआन्दोलनको खास
प्रजातन्त्र ल्याउनु थियो सबैभन्दा ठूलो आस
धेरै पार्टीहरूको निर्माण हुन थाल्यो
पार्टीहरूको बहहरू आ-आफ्नै बग्न लाग्यो ।

०४७ को नयाँ संविधानको जन्म भयो
प्रजातन्त्रको आस गर्दा निरङ्कुश नै रह्यो
राजदरबारको इशारामा बग्न थाले पार्टी
२४० वर्षसम्मका उत्पीडनका जाति ।

सामन्तका महाजालमा छुट्न सकेनन
ठूला नामका दलहरूले जातीय मुक्ति देखेनन्
उत्पीडनको जनजातिले मुक्तिको पार्टी खोले
सङ्घीय राज्यको निर्माणमा समानुपातिकको नीति घोले ।

मेचीदेखि महाकालीसम्मका जनजातिका आवाज
गुन्जन लाग्यो नेपालमा दरबारलाई पर्न गयो दबाव
जनमुक्तिको नामले पार्टी अगाडि बढ्यो
बीचमा पार्टीको महासचिव आफैँ सड्यो ।

निरङ्कुश राजा ज्ञानेन्द्रको जालमा
फस्न गयो गोरे खपाङ्गी निरङ्कुश थलमा
अर्को मगर एम्.एस्. थियो पार्टीको अग्रीम पङ्क्तिमा
उनी पनि गए पछि दरबार कै जन्तीमा ।

जातीय मुक्तिको प्रमुख नेता यसरी ढल्दै गए
सारा जनजातिहरू यस्तै फन्दामा रहे
जातजातिको सङ्घहरूको द्वीप अगाडि बढ्यो
जातीय महासङ्घको नामले केन्द्रीय गठन भयो ।

काठमाडौँमा ठूल्ठूला कार्यक्रम हुन लाग्यो
जातीय मुक्तिको सवालमा जातीय सङ्गठन जाग्यो
जातीय आवाजमा एक आत्मवादीहरू
सशङ्कित हुन गई जाल रच हौ अब बरु ।

जालको पासो थाप्न लागे ब्राह्मण कुलका एमालेहरू
जातीय सङ्गठनभित्र पस्न गई नेतृत्व दिने बरु
जातीय सङ्गठनलाई गाड्न थाल्यो एमालेले
अर्को ब्राह्मण चिनिन लागे संघीय राज्यको नामले ।

बढ्नु पर्छ अगाडि एक आत्माका हामी धनी
जसरी भए पनि ब्राह्मण कुलको छवि छ नि
यस्तै ब्राह्मण जालमा छटपटी बसेका जनजाति
बस्लान् त्यो जालमा जनजातिहरू अब कति ।

साम्यवादी नामले चिनिने कम्युनिष्ट पार्टी
जातीय मुक्ति दर्शनकारी बन्दै फुट्न गए साथी
यो थियो एकात्मवादीका महाजालको पासो
चिनिन थाले अब माओवादी हुँदै दसो ।

एक आत्मवादीहरू जसरी भए पनि
नेपालको इतिहासमा अग्रीम पङ्क्तिमा छ नि
अमर रहनु नै आफ्नो कृतिमय ठानी
भेडा, बाख्राको रूपमा जनजातिलाई मानी ।

खरिद बिक्री र धम्की त्रासमा अल्मल्याउने बानी
ब्राह्मण कुलका एक आत्मवादीका चालहरू छन् नि

बुझ्दैन अपाङ्ग भैसकेका आदिवासीहरू
तिनै ब्राह्मणका दौराको फेर समाउँछन् बरु ।

आदिवासी र दलित नामले चिनिने जातिहरू
एक आत्मवादीबाट बच्नलाई अगाडि अब सरु
एक आत्मावादीका शाह मूर्छा ढले पनि
शासन शैली तिनीहरूका जस्ताका तस्तै छन् नि ।

मुखले राम राम भन्दै बगलीमा राख्छन् छुरा
एक आत्मवादीहरूको बुझ्नु सारो छ कुरा
मेचीदेखि महाकालीसम्मका आदिवासीहरू
एकैजुट एकै मुख भएर उठौँ सबै हामीहरू ।



# माओवादीका नौमहिनेकाल

भए अब प्रधानमन्त्री प्रचण्ड दाहाल
रक्षामन्त्री बादल मगरको बादल
बाबुराम अर्थमन्त्री सञ्चारमा महरा
पाठ खेल्ने भए प्रधानमन्त्री दोहोरा ।

उपप्रधान एमालेको बामदेव भए
दुई ठाउँमा हारे पनि मन्त्रिमण्डलमा गए
मन्त्री खान सभासद्को दरकारै रहेन
ब्राह्मणहरूका जादुगर रुपी खपिसक्नु भएन ।

फोरमबाट उपेन्द्रलाई परराष्ट्रमन्त्री
तीनदलको सहमतमा भए अन्य मन्त्री
नयाँ नेपाल निर्माण गर्न संविधानको खाँचो
संविधानको निर्माण गर्न मन्त्रिमण्डलमा साँचो ।

आम नेपालीले आफ्नो विचारको अभिमत दिए
सभासदको जिम्मेवारी उम्मेद्वारले लिए
कुनै चण्डाल कुनै कङ्गाल सबै भए नेता
हावा चालमा भाका नेता गर्छन् अब के त ।

प्रचण्डलाई खाट चाहियो डेढलाखको अब
४५ हजारसम्म सभासद्को भत्ता हुने भो जब
लिखेतिखे सबै सभासद्को मालिक
माओवादी अग्रिम पथमा हुने भए मालिक ।

नयाँ नेपालको संरचना गर्ने मन्त्रिमण्डल
शुरु गर्न लागे अगाडिको शक्तिवान्को खोजताल
प्रधानमन्त्री रुक्माङ्गत पिच्छे लाग्न थाले
धेरै खालको बखेडामा जान अब थाले।

प्रचण्डको प्रधानमन्त्री मण्डलको रवाफ
पर्न गयो पूर्वकालको बहालवालामा दवाव
सर्वप्रथम सेनापति रुक्माङ्गत कटुवालमाथि
राजनीतिको प्रहार हुन थाल्यो साथी।

युद्ध कालको बहालवाला जो जो थिए जहाँ
त्यस्ताहरूको नाम लिएर लिन थाले तहाँ
शाही कालका जनयुद्ध प्रस्ताव गर्नेलाई
खोजी खोजी कारबाही गरी निलम्बित गर्ने भए दाइ।

सेनापति रुक्माङ्गतको आफ्नै थियो चाल
सेना भर्ती गर्ने कामको कूटनीतिको आयो चाल
रक्षामन्त्री माओवादीभित्रको थिए
रक्षामन्त्री बादलसँग कुनै सहमति लिए।

सेनापति रुक्माङ्गतमाथि आउने थिएन दवाव
भन्ने पनि जनतामाथि आएको थियो जवाफ
रुक्माङ्गत माथि आक्रोशको झन् बढ्यो आगो
मन्त्रिमण्डलको आक्रोश पनि बीचमा दिनहुँ जाग्यो।

सार राजनीति रुक्माङ्गतमाथि सुर भो
प्रधानमन्त्री, रक्षामन्त्रीको राजनीति क्रूर भो
राष्ट्रपति मौन रहे त्यो चालदेखि
त्यो चालबाट प्रधानमन्त्री गर्ने भए सेखी।

सेनापति छान्न लागे दलहरू अब
माओवादीबाट छनोट भए खड्का जब

एमालेको तर्फबाट छत्रमान गुरुङ
अब झन बढ्यो राजनीतिको सुरुङ।

राष्ट्रपतिभन्दा माथि हुकुमीमा पुगे
हुकुम शाहीकालको भन्दा कमी थिएन खोइ के बुझे
मन्त्रिमण्डलको क्याबिनेटले गर्नुपर्ने काम
हचुवामा जान लाग्यो प्रचण्डबाट राम।

रुकमाङ्गत कटुवाललाई निलम्बित गर्ने धाव
विचराको अवधि पूरा भैसकेको बेला दावा
गर्न लागे प्रधानमन्त्री सेनापति माथि
कारबाहीको सिफारिस लान पर्ने राष्ट्रपतिमाथि।

राष्ट्रपतिको अधिकारमा गर्न लागे खेल
रुक्माङ्गतलाई निलम्बित भयो अब हेर
निलम्बित गर्ने साथै राष्ट्रपति गर्जे
राष्ट्रपतिको आदेशले रुक्माङ्गत अब बचे।

माओवादी अब खनिए राष्ट्रपतिमाथि
अब ल्याए मन्त्रिमण्डल भङ्ग हुने साथी
जनसर्वोच्चताको ल्याउन लागे भाषा
प्रचण्डलाई अब आयो झन् ठूलो दशा।

एमालेले मन्त्रिमण्डलको समीकरण तोडे
फोरमका मन्त्रीहरूले पनि बाध्य भई छोडे
प्रधानमन्त्री प्रचण्डलाई राजीनामाको पारो
रातारात गरी पारो छाड्न भयो सारो।

राजनीतिको कुटनीतिमा अब झन परे
सत्ता छोडी विद्रोह गर्न माओवादी सरे
युद्धकालको भूमिगतले थर्काएजस्तो सम्झे
शान्ति आन्दोलनले के पो गर्ने अब विस्तारै खुम्चे।

जनसर्वोच्चको भाषणभुषण पनि
सेलाउँदै जान लागेको पनि छ नि
अब लागे माओवादी सङ्घीय राज्य दिन
आदिवासी जनजातिको भोटहरू लिन ।

माओवादी साथीहरू अति नै बाठो
अब पार्ने भए जनजातिलाई गाँठो
जातीय मुक्ति भन्छ माओको विचार
सङ्घीयको कुरो गर्छ घाँटीमा समाई निचोर ।

सबै जातजाति एकैआत्माको शिक्षाले
अझै सत्ता खोजेको छ निरन्तरले
होसियार रहन नसके खान्छन् अझै ब्राह्मणले
बिग्रन्छ आदिवासीहरूका घमण्डले ।

●

# व्यर्थको दुई वर्षे संविधानसभा

२०६४ को चैत्र २८ गते
संविधानसभाको चुनाव हुने भयो तथ्य
कुनै दलले नसोचेको काम हुन गयो
माओवादको १६५ सीट अचम्मले आयो।

कांग्रेस एमालेलाई फड्को हुन लाग्यो
माओवादी शक्तिवान् अब जाग्यो
नसोचेको सीटहरू कसो गरी आयो
कौतूहलले देशैभरि अचम्मले छायो।

माओवादको मतदान धेरै आउने कारण
दुई कुरोमा जनताहरू बाध्य भए शरण
१ नं. त डर धम्की साधारण पऱ्यो
२ नं. जातीयतामुक्ति पाउने भरमा अघि सऱ्यो।

ठूला दलका नामबाट घोषणा भयो पार्टी
कांग्रेस एमाललेलाई सारो पर्न गयो साथी
सभासदका २ वर्षे कार्यकालभित्र
संविधानको निर्माणमा लाग्नु पर्ने थियो भित्र।

तिनै हल्का नाइकेहरू स्वार्थी पङ्क्ति लागे
संविधानको निर्माण छोडी सत्ता लिप्सामा जागे
भोट माग्दा संविधानको कुरो राख्ने नेता
सभासदमा पुगेपछि गरे अब के त।

सभासदका नेताहरू दलको पुच्छर भए
दलको नेता सत्तालिप्सा बन्न अब गए
एक सभासदको मासिक भत्ता ७० हजार खान्थे
विभिन्न अपाङ्गले सभासदको पद लिन जान्थे ।

झिनाझाात्रा सभासदले संविधानको अर्थ
कुनै दिन केही नमानी भत्ता खाए व्यर्थ
दलका नाइके सत्तामाथि भण्डाफोर गरी बस्ने
साना दलका सभासदहरू आत्म मूल्यमा फस्ने ।

यस्ता कुमतिमा सबै दल लाग्दैछन्
अझै म्याद थपी भत्ता खान अहिले फेरि जाग्दैछन्
कतिपय सभासद त स्वर स्वरमै कुद्ने
पद लोलुप नेताहरूको ठूलाठूला रकम धुत्ने ।

यस्तो प्रवृत्तिको सभासदका अब काम छैन
अब पुनः कुन मुखले जनतामा आउने हैन
देशै भएका जनताहरू गफै गफमा भन्छन्
सभासदले खाका रकमको हिसाब पनि गर्छन् ।

एक वर्षको म्याद थपी अझै भत्ता खाने
रङ्गभेदमा देश लगि गृहयद्ध ताक्ने
यस्ता प्रवृत्तिको नेता देशैभरि भए
संविधानको निर्माण कार्य अब त्यसै रहे ।



# माधव नेपालको कार्यकाल

प्रचण्डको रवाफमा सत्ता छोड्नु पर्‍यो
एमालेका माधव नेपाल पद लिप्त भई अघि सर्‍यो
सभासदका उम्मेद्वारमा दुई क्षेत्रमै हार्ने
प्रधानमन्त्री पद लिनलाई सजिलै पार्ने ।

अन्तरिम संविधानमा ढोका खुल्ला थियो
सभासदमा हारे पनि सत्ता हातमा लियो
माधवको समर्थनमा २२ दल जुटी दिए
सानातिना दलको सभासदले आत्ममूल्य लिए ।

प्रधानमन्त्री हुने रहर पैलेदेखि थियो
आफ्नी आमा मर्दा पनि काजक्रिया गर्दैनथे
माधवको रहरमा नै प्रधानमन्त्री बन्यो
समर्थन जुटाउँदा लाखौंलाख रकम गर्‍यो ।

१५ महिने प्रधानमन्त्री खेल खेलमा बित्यो
संविधान निर्माण कार्य अल्मलमा सिध्यो
प्रचण्डलाई प्रधानमन्त्री पुनः बन्ने रहर
माधवलाई प्रधानमन्त्री कायम राख्ने ठहर ।

यी दुईको कलहले संविधानको मिति
दुई वर्षे कार्यावधि विकाममै सिद्धी
संविधान नबन्दामा देशमा चल्यो हलचल
माधव-प्रचण्डले समझदारी गर्ने खलबल ।

२०६७ को जेठ १४ गते
सभासदका पदावधिको अन्त्य हुने तथ्य
यो घडीमा विष परेको माछाझैं भयो
आज भन्दै भोलि भन्दै अन्तिम दिनमा गयो ।

जनताहरू कुर्लिएर नारा दिन थाले
६०१ सभासदको भत्ता फिर्ता माग्न लागे
संविधानको स सम्म बोल्न नजान्नेहरू
२ बर्ष पूरा गरी म्याद थप्न लागे बरु ।

दुई वर्षको तलबभत्ता सम्झिँदाखेरि
संसद भवन हेर्दा आँसु झार्थे फेरि
बेकामका सभासदहरू लाजै नमानी
एक वर्ष कार्यकाल बढाउनमा धावा नि ।

●

# वर्तमानको राजनीतिक दर्शन

लोकतान्त्रिक राजनीतिको भविष्य
धेरै दलहरूबीचको विचार छ अदृष्य
कुनै भन्छन् गणतन्त्र कुनै भन्दछन् राजतन्त्र
आजको जनचाहना अर्कै छ लोकतन्त्र ।

कुनै भन्छन् साम्यवादी कुनै त समाजवाद
नेपालका नेपालीहरूमा चलिरहेछ अपवाद
अन्तरिम संविधानको निर्णयमा सङ्घीय
आजका कांग्रेस एमालेहरू यसबाट तर्सिए ।

आजको सङ्घीयता जातीय आधारमा
राज्य स्थापना गर्नुपर्ने माग जोडदारमा
लागेका छन् सङ्घीय संरचना पार्टी
एकमात्र लोकतान्त्रिक राष्ट्रिय मञ्च साथी ।

जातीयताका नामबाट नौ राज्य मागे
यस प्रस्तावबाट अन्य पार्टी भाग्न लागे
मेचीदेखि महाकालीसम्मका मुख्य जाति
सङ्गम भई सङ्घीय संरचनामा बढ्दैछन् साथी ।

बीचमा रहेका अन्य न्यून जातिलाई
उप-स्वायत्तताको भागीदारमा माथि ल्याई
राज्यको उपभोगमा बिना स्वार्थ गरी
जातीय आधारमा समानुपातिक सारी ।

सङ्घीय राज्यको संरचना अघि सर्नेछ
एकात्मवादीहरू मुर्दा सरी पर्नेछ
राज्यका भागीदारमा सबै खाले जाति
राष्ट्रको अधिनायक बन्न पाउने छन् साथी ।

नेपालका भाषा, धर्म सबैको स्वतन्त्र
कुनैको हुने छैन निश्चित अलन्तर
व्यक्ति स्वार्थ र जाति स्वार्थलाई
सबै मिली छोडी दियौँ साथीभाइ ।

२५० वर्षको इतिहासले
सारा जातिपातिलाई पारिदिए बित्यासले
नेपालको राजनीतिमा एक मात्र सङ्घीयतावादी
लोकतान्त्रिक राष्ट्रिय मञ्च भए साथी ।

कुनै भेदभावबिना जन्मिएको छ
दिन रात जनमानसमा आत्म बनिएको छ
स्वार्थवादी र निरङ्कुशवादी तर्सिन्छन्
जनताको अभिमतले आफै तर्किन्छन् ।

नेपालको जाति भाषा हाम्रो सम्पत्ति
सबै खालको विकास गरेर जानु नै उन्नति
आजको अन्तिम राजनीतिको मार्ग
यसैले मात्र बनाउँछ नेपाल स्वर्ग ।

नेपालीको जन्मभूमि यही हो
सङ्घीयताले दिने कर्मभूमि पनि यही हो
आम नेपालीले छोडी देऊ स्वार्थ
नेपालीको भाग्य नबिगार व्यर्थ ।



# इतिहासको फूलबारीमा वीर काङ्सोरे

इमेबुहाङ खेवाको अठार पिँढीमुनिका तिमी
हाङ्जिली हाङदुम्बा खेवाको नौ पिँढीमुनिका तिमी
मुक्तिम हाङतिगेला खेवाको आठौँ पिँढीमुनिका तिमी
कमराय तिगेला खेवाको जेठा छोरा हौ तिमी ।

अमर भएर बाँच्न सफल छौ तिमी
सत्रथुम लिम्बुवानको आत्मा छौ तिमी
लिम्बुवानी इतिहासमा सुरक्षित छौ तिमी
हिम्मतसाथको युद्धकालीनको अमर हौ तिमी ।

खेवा वंशमा जन्म्यौ तिगेला थरमा तिमी
इतिहास बन्न सफल रह्यौ अमर रहौ तिमी
गोर्खा सेनापति रघु रानासँग युद्ध गर्ने तिमी
लिम्बुवानी भूमिमाथि बलिदानी दिने तिमी ।

तिम्रो जीवन बलिले अमर भएका छौ तिमी
तिम्रो इतिहासले लिम्बुवानी युवामा हिम्मत दिने तिमी
स्वर्गका फूलवारीमा नाँची बस सदा तिमी
तिम्रो इतिहासको पाठमा हाँसी बस तिमी ।

लिम्बुवानी शाखा सन्तान फैलिएको हेर्ने तिमी
लिम्बुवानी इतिहासमा लुकामारी खेल्ने तिमी

तिम्रो हिम्मतले तुम्लिङटारको माटो रङ्गाउने तिमी
सभा दोभानमा आत्मा बली दिएर जाने तिमी।

लिम्बुवानी शाखा सन्तानको सम्झना भयौ तिमी
२५० वर्ष बिते पनि फुली बसेका छौ तिमी
तिम्रा सुगन्धित बासनामा नाँची बसेका छौ तिमी
लिम्बुवानी हिम्मतलाई साहस दिने छौ तिमी।

वीर जीवन बलीले अरुण सीमा लगाउने तिमी
गन्धे पानी डाँडामा चिहान बनी बस्ने तिमी
मूल सडकको बायाँ किनारामा बसेका छौ तिमी
तिम्रा महाशत्रु रघुराना दायाँ किनारमा देख्छौ तिमी।

दुई शक्तिको चौतारामा वरपीपल देख्दैछौ तिमी
चौतारोको शीतल हावामा हाँसिरहने छौ तिमी
साहसको सहारामा बढेका लिम्बुवानी हेर्ने गर तिमी
वीर काङसोरे नामले सदा फुली बस तिमी।

लिम्बुवानको हिम्मतमा लुकी बस तिमी
लिम्बुवानी जबसम्म रहन्छ तबसम्म बाँच तिमी
निश्चय पनि यो कलियुगको भोगमा जन्मेको तिमी
कलियुग रहेसम्म अमर नै रहने छौ तिमी।

गोर्खा सेनाहरूको धेरै हारहरू बुझ्ने नै हौ तिमी
गोर्खा राजा सन्धिमा आउनु इतिहास बन्नु तिमी
तुम्लिङको सन्धि पत्र लिम्बुवानी बहादुर तिमी
मकालुको फेदीमा गुफा बनी बस तिमी।

गोर्खा राजा र लिम्बुवानको छाप बनेका छौ तिमी
फूल फुल्छ त्यसै झर्छ तर झर्दैनौ तिमी
तिम्रो त्यो हिम्मतको लिम्बुवानी मुटु बन तिमी
शाहवंशी र लिम्बुवानको प्रतीक बनेका छौ तिमी।

ऐतिहासिक कवितासङ्ग्रहमा हाँसी रहनू तिमी
ऐतिहासिक पानापानामा बाँची बस्नू तिमी
जय लिम्बुवानी सेवा लिई बस्नू तिमी
अमरको फूलबारीमा नाँची बस्नू तिमी ।

**काङ्सोरे** : *पृथ्वी नारायण शाहका सेना विरुद्ध लड्ने लिम्बुवानका महासेनानी काङसोरे । जसको कारण लिम्बुवान वि.सं. २०२१ सम्म स्वायत्त थियो र लिम्बुवानलाई लडेर होइन सन्धि गरेर नेपालमा गाभ्न बाध्य पारियो । आजतक लिम्बुवानमा काङ्सोरेप्रति ठूलो सम्मान दर्साइन्छ ।*



लोकेन्द्र तिगेला लिम्बू


**जन्म** : १२ जेठ २००५

**जन्मस्थान** : हात्तीखर्क-२, छथर, धनकुटा, लिम्बुवान

**योग्यता** : म्याट्रिक पास

**पेशा** : किसान, समाजसेवा, राजनीति

**अनुभव** :
- शिक्षण पेशा
- प्रधानपञ्च, हात्तीखर्क गाउँ पञ्चायत (०३८ देखि ०४३)
- गाविस अध्यक्ष, हात्तीखर्क (०४८ देखि ०५३ सम्म)

**संलग्नता** :
- राष्ट्रिय पार्षद - किरात याक्थुङ चुम्लुङ, केन्द्रीय समिति
- आजीवन सदस्य – किरात याक्थुङ चुम्लुङ, २०४७
- आजीवन सदस्य, कि[illegible] तथा साहित्य उत्थान सङ्घ, २०४२

**कृति** :
- मानव उत्पत्ति र खेबा वंशावली पुस्तक २०५४ (संयुक्त)
- लिम्बुवान लोककथा सङ्कलन तथा शोधकर्ताहरूलाई स्रोतको रूपमा सहयोग तथा विभिन्न पत्रपत्रिकामा लेख-रचना प्रकाशित

**सम्मान** :
- श्री भारती मावि को व्यवस्थापनमा वि.सं. २०३५ बाट निरन्तर अग्रणी भूमिका निर्वाह गरेबापत नेपाल सरकारबाट प्रशंसापत्र ०६४ द्वारा सम्मानित

**ठेगाना** :
हात्तीखर्क-२, धनकुटा, [illegible], लिम्बुवान, नेपाल
फोन : [illegible]
इमेल : [illegible]@gmail.com


कवि लोकेन्द्र तिगेला लिम्बूका कविता पढ्दा, समाजका अग्रज तुम्याहाङले नेपालको इतिहास, राजनीतिको नाममा भएका षड्यन्त्रहरू, विशेषतः नेपालका आदिवासी भूमिपुत्र समुदायलाई सिध्याउन एकात्मक राज्यले खेलेका खेलका कथाहरू आफ्ना छोराछोरी, नातिनातिनालाई सुनाइरहेको आभाष हुन्छ ।

उहाँका कविताहरू पढिरहँदा तमोरको शिरदेखि डुङ्गामा चढेर वरिपरिका दृश्यहरू नियाल्दै सलल बगिरहेको अनुभूति हुन्छ । एउटा गजबको लयात्मक क्रमिकता छ । कवि तिगेलाका कविताहरू लिम्बुवान भूमिको भाग्यरेखा बनेर बगिरहेका अस्पष्ट तमोर नदीहरू हुन्, जो अनेक बाधा व्यवधानको बाबजुद पनि बग्न कहिल्यै छोड्दैनन् ।

उहाँका कविताहरूजस्तै लाग्छ कवि लोकेन्द्र दाइको कवित्व । सरल र सिलसिलाबद्ध । सङ्घीयता, सहअस्तित्व र लिम्बुवान भनेपछि हुरूक्क हुने कवि तिगेलाका कविताहरू उत्साहपूर्वक पढिनेछ, किनकि भन्डै कालो कम्बलले छोपिसकिएका तथ्याङ्क कविता बनेर बाहिर आएका छन् ।

— कुमार लिङ्देन 'मिराक'
kumarlingden@gmail.com

नेपालको इतिहास र राजनीतिलाई अति सूक्ष्मदेखि वृहत्सम्म अध्ययन गरेर, कतै नझुकी स्पष्ट विचार राखेर स्वाभिमानी बन्नु उहाँको परिचय हो । उहाँलाई महलको नोकर बसेर महलमा ओत्तिनुभन्दा वास्तविक धरातल टेकेर झुपडीमा बस्नु आत्मसम्मान हो भन्ने लाग्दछ । त्यसैको दस्तावेज हो यहाँ प्रस्तुत कविताहरू । यस शृङ्खला कवितासङ्ग्रहमा समाविष्ट कविताहरूका आधारमा उहाँलाई चेतनाकवि भन्न सकिन्छ ।

- विश्वास दीप तिगेला



9789937235433